# दोषी चश्मा

(सोह्र ओटा मौलिक मनोवैज्ञानिक कथा)

विश्वेश्वरप्रसाद कोइराला



त्रि. वि. केन्द्रीय पुस्तकालय क्याटलग
N891.49531
Ko475d कोइराला, विश्वेश्वरप्रसाद
दोश्री चश्मा (सोह्रवटा मौलिक मनोवैज्ञानिक कथा). सातौं संस्क. : ललितपुर, साझा प्रकाशन, २०६६ वि.
१०४ पृ.
ISBN: 978-99933-2-750-9

१. नेपाली कथासङ्ग्रह ।. आख्या.

**प्रकाशक** : साझा प्रकाशन
**संस्करण** : पहिलो २०३२, दोस्रो २०३९, तेस्रो २०४३, चौथो २०४९, पाँचौं, २०६०, छैटौं २०६४
सातौं २०६६ (सा. प्र. बाट छैटौं पटक) ३१०० प्रति
**आवरणकला** : टेकवीर मुखिया
**मूल्य** : रु. ६०।–
**मुद्रक** : साझा प्रकाशनको छापाखाना, पुलचोक, ललितपुर
फोन : ५५२१०२३, फ्याक्स : ५५४४२३६

# भूमिका

सुविख्यात पण्डित विश्वेश्वरप्रसाद कोइराला महोदयका कथाको यो सङ्ग्रह सन् १९४४ ईस्वीमा नै छापिने भएको थियो तथा यसका केही पृष्ठ छापिई पनि सकेका थिए, तर नाना प्रकारका विघ्न बाधाले गर्दा यसको प्रकाशन ढीलो भए तापनि यो बडो आनन्दको विषय छ, किनभने यसमा छापिएका कथाहरू अनेक दृष्टिले बडो महत्वपूर्ण छन् तथा नेपाली भाषामा प्रचलित साधारण प्रकारका वर्णन-प्रधान कथाहरूभन्दा भिन्न छन्। नेपाली साहित्य सम्मेलनद्वारा सन् १९३८ ईस्वीमा प्रकाशित विविध लेखकहरूका कथाको सङ्ग्रह भएका कथा-कुसुम नामक पुस्तकमा श्री विश्वेश्वरप्रसाद कोइराला महोदयका कथाहरू छापिएपछि मैले उहाँसँग अरू कथाहरू लेख्न निवेदन गरेथें तथा उहाँका नै कथाहरू छाप्ने अनुरोध पनि गरेथें। मेरो त्यो इच्छा आज सुयोग्य लेखकका प्रयत्नद्वारा पूर्ण भएको हुँदा म प्रसन्न हुनु ता स्वाभाविक नै छ तर नेपाली साहित्यमा यो कलापूर्ण ग्रन्थ उच्च साहित्यका रूपमा स्वागत गरिनेछ भन्ने पनि मेरो आशा छ।

मानिस आफ्नो जीवनमा जो काम गर्छ त्यसको प्रेरणा आफ्नो मनबाट नै पाउँछ भन्ने कुरो ता सार्वजनिक अनुभवबाट प्रमाणित भएको छ। यो मानिसको प्रेरणाले कस्तो अकल्पित र अचिन्तित रूप लिन सक्दो रहेछ, त्यो कुरा यी कथाहरू पढ्दा चाल पाइन्छ। साइकोएनालिसिजका सिद्धान्तहरूको यहाँ विवेचना गर्ने मेरो इच्छा छैन, न आधुनिक मनोविज्ञान कसरी मानिसलाई उसका स्वाभाविक प्रवृत्तिको एउटा पुञ्ज मात्र ठान्न लागिरहेछ त्यसको नै अहिले छलफल गर्ने मेरो अभिप्राय छ। तर यो सङ्ग्रहमा छापिएका कतिपय कथाहरूमा व्यक्त

गरिएका केही मनोवैज्ञानिक तत्वहरूको यो भूमिकामा अलिकता विश्लेषण गर्नु अप्रासङ्गिक नठहरिएला ।

पहिले "कर्नेलको घोडा" शीर्षक कथाको पूर्वार्द्धलाई नै हेरूँ । युवती कर्नेल्नीका नसा-नसामा यौवनको तातो रगत बगिरहेछ । उनले आफैंजस्तो यौवनले पूर्ण युवक पतिको इच्छा गर्नु बडो स्वाभाविक कुरो छ । तर उनीले पाउँछिन् एउटा बूढो र दुर्बल पति । यो पति उनको इच्छाको अनुकूल हुँदैन भन्ने आवश्यकता छैन । उच्च कुलकी कर्नेल्नी आफ्नो अतृप्त कामवासनाद्वारा कुनै अयोग्य वा अशालीन कार्य गर्न सक्तिनन् र त्यो वासना उनका चेतनाबाट गएर अचेतनमा लुकेर बस्छ । लुकेर बसे तापनि उसमा निस्कने ठूलो तीव्रता छ । कर्नेल्नी आफ्नो सामाजिक संस्कृतिद्वारा त्यसको निरोध गर्छिन् औ त्यसलाई आफ्नो टाउको ठाडो पार्न दिन्नन् । कालान्तरमा कर्नेल्नीको युवक तथा शक्तिशाली पति खोज्ने अतृप्त कामवासना कर्नेलको बलियो घोडाप्रति उनको स्वाभाविक प्रेमका रूपमा प्रकट हुन्छ र कर्नेल्नी त्यो घोडालाई मन पराउन थाल्छिन् । यो उनको काम-वासनाको संस्कृत रूप हो औ यसले उनको अतृप्त काम-वासनाले एउटा सुन्दर र स्वास्थ्यप्रद विकास पाउँछ । अतृप्त वासनाको गति र त्यसको संस्कारको यो सुन्दर चित्र, जो कोइराला महोदयले यो कथामा खडा गर्नु भएको छ, त्यो नेपाली साहित्यमा एउटा अद्वितीय कुरो छ औ त्यसले गर्दा यो कथाले नेपाली साहित्यमा मात्र होइन संसारका कथा-साहित्यमा ठूलो स्थान प्राप्त गर्छ ।

"दोषी चश्मा" शीर्षक कथामा साँच्चीको बाघले खानु कहाँ छ कहाँ मनको बाघले मानिसलाई खाएका कुराको जो चित्र खडा गरिएको छ, त्यो साहित्यकलाको एउटा अत्यन्त उच्चकोटीको उदाहरण छ । "होड" मा बिरालाले उसको दर्शनले नै साँतो गएको मूसालाई खेलाई खेलाई मारेझैं मनको विज्ञान जान्ने रसिलो पतिले आफ्नी सुधी

पत्नीलाई उनको मनमा भएको मेरो प्रति मेरो बाहेक अरू कसैको नहोस् भन्ने अत्यन्त स्वाभाविक स्त्रियोचित इच्छालाई ईर्ष्याका रूपमा परिवर्तित गराई उनलाई एउटा असम्भव कुरो स्वीकार गर्न कर लागेको कुरो पढ्दा हाम्रो हृदयलाई कोइराला महोदयका कलापूर्ण लेखाइको प्रशंसा मनमा कत्ति गाभ नराखी गर्न कर लाउँछ। "प्रेम" मा आफ्नी प्रिय पत्नीको अनुपस्थितिले उनको गार्हस्थ जीवनमा जो विशृङ्खलता उत्पन्न भयो, त्यसले गर्दा रामनाथको मानसिक अवस्था कस्तो निराशापूर्ण भयो, त्यसको अत्यन्त स्वाभाविक चित्र उपस्थित गरी पत्नी आउँछिन् भन्ने समाचारले नै रामनाथले संसारलाई अर्कै दृष्टिले हेर्न थालेको तथा पत्नीका आगमनले उनको निराशा आशाका रूपमा फेरिई रामनाथले जीवनको जो प्रशंसा गर्छन्, त्यो स्वाभाविक चित्र अङ्कन गर्न सक्ने कलाकार कोइराला महोदयको कसले प्रशंसा नगर्ला ?

यो सङ्ग्रहमा भएका प्रत्येक कथाको विश्लेषण गर्न मै अघि सरे यसका पाठक-पाठिकालाई उहाँहरूले गर्न पर्ने केही काम नरहने हुनाले र उहाँहरूको क्रोधभाजन हुन मलाई मन नपरेको हुनाले यो कथाको ढिस्को कोट्याएर यसमा के रहेछ सो बुझ्ने एक दृष्टिले छुच्चो चलन, किनभने यसले समष्टि नहेरी व्यष्टिपट्टि मात्र हेर्छ, छाडी म अब एउटा अर्को कुरो निवेदन गर्न साहस गर्छु।

कुन कथा राम्रो तथा कुन कथा नराम्रो, यसको अन्तिम निर्णय यसका पाठक तथा पाठिकाका रुचिमा नै निर्भर गर्छ। त्यो रुचि पुस्तक छापिएर उहाँहरूका करकमलमा नपुगेसम्म बुझ्न असम्भव छ। तर कला केही कुरो हो तथा कलामा केही शक्ति छ भने "दोषी चश्मा" ले यसका पाठक-पाठिकाहरूबाट उहाँहरूको प्रेम प्राप्त गरिछाड्ला भन्ने मेरो आशा छ।

मलाई मनुष्य-जीवनको साधारण घटनाको सोझो वर्णन भएको कथा पटक्क मन पर्दैन। त्यस्ता कुरा ता रातदिन हाम्रो आफ्ना

जीवन तथा हामीले चिने-जानेका मानिसका जीवनमा भैरहेका छन् । त्यस्ता कुरा कथाका रूपमा पढ्दा भर्को लागेर आउँछ किनभने तिनले हाम्रो भावसित कुरा गर्दैनन् । हाम्रो भाव जागृत गराउन पहिले लेखकले भाव जागृत हुनुपर्छ औ घटनालाई उसले आफ्ना भावपूर्ण दृष्टिले देख्नुपर्छ । वहाँपछि आफ्नो दृष्टिकोणले उसले हाम्रा सम्मुख उपस्थित गर्दा त्यो कथाले हाम्रो भावलाई बिउँझाउँछ र हामी त्यसको पठनद्वारा आनन्द अनुभव गर्छौं । विश्वेश्वर बाबूकी पवित्राजस्ती बाहुनी वा नोकर्नी ता हामीले धेरै देखेका छौं, त्यो कथामा पवित्राका कार्य मात्र वर्णन भएको भए त्यो कथाको मूल्य मेरो दृष्टिमा उति हुँदैनथ्यो । तर बाल-विधवा पवित्राले दाम्पत्य जीवन व्यतीत गर्न नपाएको तथा त्यो अभाव उनको अन्तस्तलमा गएर लुकेको कुरा जब म सम्झन्छु तथा मालिकप्रति प्रेमको रूप ग्रहण गरी पवित्राको त्यो नअघाएको भोकले अर्केरूप ग्रहण गरी प्रकट भएको कुरा जब मेरा मनमा ल्याउँछु, त्यो बेला पवित्राको हाँसो, पवित्राको काम गर्ने चाला, पवित्राको ठट्टा सबैले मेरा भावलाई मैले चिताउँदै नचिताएका रूपले कृतकृत्याउन थाल्छन् र म विश्वेश्वर बाबु कस्तो महान् कलाकार हुनुहुँदोरहेछ सो अनुभव गर्न थाल्छु । मास्टरसाहेबका चरित्रमा जो दुईमुखी धारा बगेको छ त्यसले पो त्यो कथाको रोचकता बढेको छ ।

चटक गर्नेले एक रुपियाँको चार रुपियाँ तुल्याउँदा उसका बाहुलाबाट रुपियाँ झरेको रमितेहरूले देखे भने त्यो चटकको केही मूल्य हुँदैन; उस्तै कथाकारले पनि आफ्नो दृष्टिकोण र अर्थलाई लुकाएको हुन्छ । तिनको प्रभाव पढ्नेको भावमाथि मात्र पर्छ औ कथा पढिसकेपछि पढ्नेले जम्मै वर्णन गरिएका कुरालाई एउटा नचिताएको, अनुमान नगरेको तथा विलक्षण दृष्टिले देख्न थाल्छ । "बौलाहा" शीर्षक कथाको बौलाहा उसको अपराधको कारण भएकी उसकी पत्नी मर्दा भलाद्मीले लाउने लुगा लाई धर्म-शास्त्रपट्टि लहसिएको देख्दा हाम्रो हृदयमा त्यो बौलाहाप्रति जो सहानुभूति सृष्टि हुन्छ औ त्यसलाई बौलाहा पार्ने सामाजिक नियमप्रति जो भाव उत्पन्न हुन्छ, तिनको

वर्णन गरेर साध्य छैन । तर झ्यालखानाका हाकिम र पण्डित बाजेसमेत त्यसको परिवर्तन पण्डित बाजेको धर्मोपदेशको परिणाम हो भनेर मख्ख परेर बस्छन् । कलाकारको कलाचातुरी तथा सीप आफूलाई लुकाउनामा छ ।

भूमिका लम्मिदै गयो, यसलाई टुङ्ग्याउने अब वेला भयो । अचेल हाम्रो साहित्यमा पनि कवि-सम्राट्, कवि-शिरोमणि इत्यादि उपाधि प्रदान गर्ने चलन चलेको छ । सो चलनको देखासिकी गर्ने मेरो अभिप्राय होइन तर एउटा कुरो नभनी मेरो मन मान्दैन । नेपाली साहित्यका जो कथाकारहरू छन् औ तिनको सङ्ख्या अत्यन्त सुरम्य रीतिले दिनहुँ बढ्दो छ, तिनीसँग तुलना गर्दा मेरा एकजना साहित्यिक मित्रले भनेझैं यो सङ्ग्रहमा छापिएका कथाहरूमा सुयोग्य लेखकको सर्वप्रथम स्थान छ भनी मैले भनें भने कसैको स्पर्धामाथि आघात पुऱ्याउने दोषको भागी हुनुपर्ने छैन भन्ने मेरो विश्वास छ ।

दार्जीलिङ
माघ १, २००६ ।

– सूर्यविक्रम ज्ञवाली

# कथा-क्रम

# दोषी चशमा

केशवराजको चश्मा दोषी थियो । अलिक टाढाको मानिस तिनी चिन्न सक्तैनथे । किताब पढ्दा तिनको आँखालाई निकै बल पर्थ्यो । चश्माको पावर तिनका आँखाका लागि कम भएछ । धेरै दिनदेखि तिनी अर्को चश्मा लिनें विचारमा थिए, तर अझै अनुकूल परेको थिएन ।

तिनी जर्साबकहाँ चाकरी गर्न जान्थे । एक दिन सधैंको जस्तो चाकरीमा गएका थिए, तर ५॥ बज्दा पनि जर्साबको सवारी भएन । आज सवारी हुँदैन कि ? सारा चाकरिया निराश भएर आज सवारी हुँदैन भन्ने निश्चय गरी फर्के ! तर केशवराज महलको अगाडिको चौर रिक्त भएपछि पनि धेरै बेरसम्म आशाले बसिरहे । साँझ पर्न लागेको थियो । सूर्यलाई पश्चिमतिर पहाडले ढाकिदिएको हुनाले हाम्रो पृथ्वी त अँध्यारिंदै आएको थियो तर आकाशतिर सूर्यका लामा रश्मि तेर्सिरहेका थिए । साथीभाइसँग छुट्टिएका, बाटो बिराएका, एक-दुई बादलका टुक्रा आकाशमा रँगमगिदै थिए । केशवराजलाई यो दृश्यले लोभ्यायो । उनी पनि आज जर्साबको सवारी हुँदैन भन्ने निश्चय गरेर बाटो लागे । अरू दिन भएको भए जर्साबका चाकरी नपाउँदा तिनी कति दुःखित हुन्थे, तर आज तिनलाई बडो उत्साह थियो । फूर्तिसँग डेग बढाउँदै धानको लहलहाउँदो खेतबाट आएको सुगन्धी वायुलाई स्वादसँग फोक्सोभित्र भर्दै तिनी आइरहेका थिए । त्यो टाढाको कालो वस्तु ढुङ्गा हो कि मूढो हो कि, भैंसी हो कि, कि त मानिस नै हो, यो तिनले ठम्याउन सकेनन् । चश्मा कस्तो बेकामको भएछ, तिनले फेरि सम्झे । तर यो विचारले तिनलाई धेरै बेर चिन्तित पारेन । त्यसै बखतमा पछिल्तिरबाट 'भों, भों' गर्दै एउटा मोटर आयो । मोटरको नम्बर हेरेर 'स्वस्ति' गर्नुपर्ने

हुनाले, चश्माको घेरालाई देब्रे हातको बूढी र चोर औंलाले समातेर उनले मोटरको नम्बर-प्लेटलाई गौर गरे । "धत्, यो चश्माले ठ्याम्मै काम नचल्ने भयो ।" मोटरको नम्बर उनले पढ्न सकेनन् । त्यसै बखतमा मोटर हर्र गयो, अनि पो मोटरलाई र मोटरमा राज भएका जर्सावलाई तिनले चिने र हतपताउँदै स्वस्ति गरे । चश्माले यहाँ पनि धोका दियो । "चश्माको पावर ठीक भएको भए म स्वस्ति गर्न पाउँथें, चाकरी पुग्थ्यो ।" केशवराज हतोत्साह भए । धेरै दिनदेखि आँखा जँचाई नयाँ चश्मा लिने उनले विचार गरेका थिए, कुनै काम गर्ने निश्चय गरेपछि गरिहाल्नू भन्ने उपदेशको महत्व तिनले आजै बुझे । चश्मा नफेरी त तिनलाई धरै थिएन । फेर्न त परिहाल्थ्यो र तिनले फेर्ने निश्चय पनि गरेका थिए । तिनले पहिले नै फेरेको भए आजको घटना हुन पाउने थिएन ।

तिनलाई मर्का पर्ने त एउटा अर्को कुरो छ । जर्सायले तिनलाई निश्चय नजर भयो होला । तिनी ठिक्क मोटरतिर फर्किरहे, स्वस्ति गरेनन् । यो नटेरेको हुन्छ । उहाँबाट नटेरेकै हो भन्नै ठानिबक्स्यो होला । यतिका दिन चाकरी गर्दा पनि केही बन्दोबस्त जर्साबबाट नहुँदा केशवराजले यस्ता जर्साबलाई के टेर्नु भनेर नटेरेको भन्ने जर्साबका मनमा पऱ्योहोला । ठूला मानिसहरू इज्जतका कुरामा बडा इखालु हुन्छन् र पछिसम्म सम्झिरहन्छन् । केशवराजलाई बडो गाह्रो पऱ्यो । तिनका सारा आशा-भरोसा मौसूफ जर्साब होइबक्सिन्थ्यो र उहाँले यस्तो भूल धारणा मनमा लिइबक्स्यो भने त तिनको बासै उठ्यो ।

यसरी यो कुरा विचार गर्दै तिनी घर पुगे । साँझ झमक्क परिसकेको थियो । घर पुग्दा तिनलाई रीस उठ्न थालिसकेको थियो । सबभन्दा पहिले त तिनको रीस चश्मामाथि खनियो, "यो ठाँडो.........।" त्यसपछि आफूमाथि खनियो, "यो मूर्ख, काम पहिले बिगारेपछि आँखा देख्ने........दैलो देख्यो........।" कोठामा पुगेर लुगा फुकाल्न थाले । टिमिक्क परेको सुरुवाल तिनको गोडाबाट हतपत निस्कन खोजेन, त्यसमा तिनको क्रोधको झन् मात्रा बढ्यो र जब सुने भातमा केही विलम्ब छ, तिनको क्रोधको सीमा रहेन । उर्लंदै फलाक्दै, तिनी

बुइगलमा पुगे, जहाँ दिउँसो राम्ररी नहेरेर किनेको चिसो दाउरालाई फू फू गरी बाल्ने प्रयत्नमा तिनकी धर्मपत्नी लागेकी थिइन् । "जैरी, वडी सिपालु म छु आफूलाई भन्छे, घमण्ड छ यसलाई, आफ्नो पोइलाई टायममा भातसम्म खुवाउन पनि सक्तिन । ए मोरी, के गरिरहेकी थिइस् यतिका बेर ? दुई घडी रात गएपछि चूल्हो फुक्न लागिरहिछस् ? काममा बाहिर गयो, लखतरान भई घर फर्क्यो र अब गाँस टिप्न पाइएला भन्यो त यहाँ......।" र अरू के के फलाकिरहे । यो अचानकको क्रोध देखेर तिनकी स्त्री डराउनुको सट्टा छक्क परिन् ।

भात खाएर सुत्दा तिनलाई निद्रा परेन । रातभरि "अहँ अहँ" गर्दै बिछ्यौनामा छटपटाइरहे । तिनबाट निश्चय नै ठूलो अपराध भएको छ ! आफ्ना अन्नदाता अगाडि देखिनु, आफूले नटेरेर अभिवादनसम्म पनि नगर्नु, यो त निमकहराम हो, एउटा पाप पनि हो र केशवराजले आफ्नो त चित्त बुझाए । तिनले जानी-जानीकन नटेरेको होइन । हृदय तिनको पवित्र छ, अन्धोले देखेन भनेर कसैले रिसाउनु हुन्छ ? तिनको यसमा केही अपराध छैन । केवल एउटा सानो बिराम छ–पहिले नै चश्मा नसाट्नु, यद्यपि तिनको केही अपराध छैन तर जर्साबको दिलमा त नराम्रो पर्‍यो होला । जर्साबको मनमा मैले नटेरेको भन्ने भावना त पर्न दिनु हुँदैन । केशवराजले त्यो भूल निवारण गर्ने कुनै युक्ति देखेनन् ।

ननिदाएर छट्पटाएका देखेर तिनकी पत्नीले सोधिन्– "किन निद्रा परेन ? केको दुःख छ ? भर्जी होस् न ।" पहिले त केशवराजलाई यो प्रश्नमा रीस उठ्यो, काम न काज सबै कुरो जान्न खोज्छे र आफ्नो क्रोध क़ाबूमा राखेर केवल "केही होइन" भन्ने मात्र उत्तर दिए । दुलहीबाट यो कुराको विषयमा केही सल्लाह मिल्न सक्छ भन्ने तिनलाई आशा नै थिएन– यो यत्रो ठूलो कुरा ! त्यसो हुनाले दुलहीलाई केही भन्न उनलाई मन लागेन । तर दुलहीले ढिपी गर्दा त्यो विशेष घटनालाई नभनेर गोल बोलीमा कुरा गरे– "मबाट एउटा कसूर भयो । एउटा ठूलो मानिसलाई मैले नटेरेको जस्तो गरें । अब के उपाय गर्ने ? तिनी रिसाए भने त बडो बरबाद भयो ।"

केशवराज आत्तिएका थिए । दुलहीले सजिलैसँग उत्तर दिइन्– "गएर माफी माग्नुहवस् न ! भैहाल्छ नि ।"

यो युक्ति तिनलाई पनि मन पऱ्यो र भोलि बिहान गई माफी माग्ने निश्चय गरे । अब त तिनलाई निद्रा चाहिएन, तर कहिले बिहान होला भन्ने ध्याउन्नले तिनले बाँकी रहेको रात उपयोगमा ल्यउन सकेनन् र भिसमिसेमै उठेर लुगा लाएर जान तयार परे । केवल घडीले अबेर गरिदियो ।

अझै आठ बज्न तीन घण्टा बाँकी छ । आठ नबजी जर्साबको तल सवारी हुँदैन । चाकरीबाजको टायमै त्यही हो । पर्खंदा पर्खंदा तिनले सम्झे । आफ्नो घरमा पर्खनुभन्दा त ढोका नै कुर्नु असल हो नि भनेर छ बजे तिनी जर्साबकहाँ जान भनी हिंडे । साइत नपरेको होइन–खर्पनभरि दहीका कहतरा देखिए, काम सिद्ध हुने भयो ।

दुई घण्टा ढोका कुरेपछि बिस्तार बिस्तार चाकरीबाज आउन थाले र दरबारको अघिल्तिरको चौर मान्छेले भरियो । निन्याउरो मुख लाएर केशवराज छुट्टै बसेका थिए । छुट्टै बस्नाको उनको महान् उद्देश्य के थियो भने घुईंचोमा कसलाई नजर हुन्छ कसलाई हुँदैन, थाहा पाईदैन, राम्रो चाकरी पाइन्छ र एकान्तको मौका पऱ्यो भने माफीको कुरा पनि बिन्ती गर्न पाइन्छ ।

पर्खालभित्रबाट घोडाको टापको सङ्गीत सुन्न भनी उत्सुक भैरहेका केशवराजका कानमा जर्साबको क्रुद्ध-बाणी पऱ्यो ।

कुन्नी के काम बिगार्दा जर्साब सइसमाथि रिसानी भैरहेको थियो । उहाँको शान्त स्वभावका विषयमा सबैको एकमत छ, उहाँले रिसाएको कसैले देखेको छैन । आज किन रिसानी भयो त ? उहाँको क्रोध शब्दका रूपमा पर्खाल छेडी बाहिरसम्म आइरहेको थियो ।

केशवराजले उहाँको रीस थाहा पाए । हिजोको कुराले उहाँलाई निकै चोट परेछ । चोट पर्ने कुरै थियो । ठूला मानिसको अहङ्कारमा धक्का दिनु तिनीहरूको सबभन्दा कोमल स्थानमा स्पर्श गर्नु हो । सहन सक्तैनन् । अहँ, यो क्रुद्ध अवस्थामा केशवराजले माफी माग्नु उचित छैन । कहीं क्रोधको धारा आफ्नै टाउकोमाथि बग्न गयो भने ? केशवराज घरतिर फर्के ।

बाटामा तिनमाथि नाताकतको दौडाहा भयो । हिजो राति भात पनि राम्ररी खाएका थिएनन्; निद्रा ता पटक्क लागेको थिएन र

आफ्ना विरामका विषयको कुरा मनमा खेलाउँदा तिनी विरामीजस्ता भए । एक डेग हिंड्दा पनि तिनको दम फुल्न थाल्यो । आफ्नो यो अवस्था देखेर उनलाई आफूमाथि दया लाग्न थाल्यो औ नबुझेर सानो कुरामा रिसाउने जर्साबसँग रीस उठ्न थाल्यो । "मेरो कुन ठूलो अपराध हो र ? चश्माले भेट्टाएन, चिन्न सकिनँ, तेसो हुनाले स्वस्ति गरिनँ । सधैं त विहान बेलुका गई ढोका कुरी बसिहालेको छु नि । मेरो मनसुबा उहाँलाई नटेर्ने भएको भए यसरी किन चाकरी गर्थें ? त्यति पनि त बुझिदिनुपर्छ । उहाँबाट विनाकारण ममाथि रिसानी हुन्छ भने के लाग्यो मलाई पनि खाँचो छैन । आफूले मर्नु हुँदिन । तर घर पुग्दा नपुग्दै तिनको यो विचार हरायो र पहिलेकै विचार मनमा आउन थाल्यो । "जसले चाकरीकै भरमा दुई साँझ गाँस टिप्छ, ऊजस्ता झुत्रेले टेक राख्ने रे । टेक राखेर के ? जर्साबको के बिग्रन्छ ? के उहाँको भ्रम निवारण हुन्छ ? आफैं भोको मर्नु पर्छ । हामीहरू जस्ताले त्यस्ता ठूलासँग टेक राख्ने रे । अहँ अहँ, एउटा भूललाई अर्कोले सच्याउन सक्तैन । गएर माफी माग्नै पर्छ ।

भरे फेरि क्षमा याचनाका निमित्त केशवराजले ढोकातिर प्रस्थान गरे । जर्साबको घोडामा सवारी भयो । केशवराज डरले थर-थर काँपिरहेका थिए । भने जस्तो एकान्तको मौका पाएर डरले भकभकाएर बिन्ती गरे– "प्रभू ! चश्माको दोष..........माफ पाऊँ ।"

जर्साबले घोडा थामेर नबुझेर सोधिबक्सियो– "के भन्यौ ? केको माफी ?"

केशवराजको सातो गयो । जर्साब कति रिसाइबक्सेको रहेछ । माफीसम्म दिन खोजिबक्सिन्न । केशवराजले चारैतिर अँध्यारो देख्नथाले, काम्न लागेको गोडाले भर दिएन । दुवै हातले कपाल समातेर थुचुक्क बसे । जर्साबले धेरै खोजिनिती नगरी घोडा बढाइबक्सियो । घोडाको टापले उडाएको धूलोले सडकको एक कुनामा कपाल समातेर बस्ने केशवराजलाई ढकमक्क ढाक्यो ।

केशवराज एक्कासि ५० वर्षका बूढाजस्ता देखिन थाले । हिंड्दा कम्मरमा हात लाउनु पर्ने भयो, लट्ठीको आवश्यकता परेको तिनले थाहा पाए । केशवराजको कल्पना सत्य निस्क्यो । जर्साब रिसानी

भएछ औ अघोर रिसानी भएछ । घर पुगेर निराश भएर लामो सास तानेर बाहिर जाने लुगा नफुकाली कोटैसमेत बिछ्यौनामा उनी पछारिए र खान्न भनेर समाचार पठाए ।

केशवराजको बाँच्ने प्रेरणा जागरित भयो । तिनले यसरी खुट्टा छोड्नु हुँदैन । तिनले जर्साबलाई बुझाउनै पाएनन् । राम्ररी बुझाएको भए जर्साबले निश्चय नै माफी बक्सिन्थ्यो । यहाँ दयाको सागर होइबक्सिन्छ । आफैं आत्तिएर बाक्यै ननिकाल्ने ? सोझै माफ पाऊँ भनेर माफी पाइन्छ ? घटनाको सब इतिहास, चश्माले दिएको धोखा, पछि स्वस्ति पनि गरेको, र मोटरको क्यारेज बाक्स इत्यादि सब खुलासा गरे पो माफी पाइन्छ । भोलिपल्ट बिहान उठेर फेरि ढोकामा गए । जर्साबलाई आदिदेखि अन्त्यसम्म सुनाए । जर्साबबाट मर्जी भयो– "बुझें, बुझें, म त्यति पनि बुझ्दिनं ? तिमी ता बडा अनौठाका मानिस रहेछौ । यस्तो जाबो कुरामा.......।"

केशवराज निधक्क भए । जर्साबबाट बडो करुणा राखी माफी बक्सियो । कति दयालु होइबक्सिन्छ । यी सब गुण भएर त लक्ष्मी पनि यहाँ बास गर्छिन्; कत्रो सुख छ । यी सब कुरा हिजै बिन्ती चढाएको भए तिनलाई यतिको मानसिक चिन्ता खप्नै पर्ने थिएन । तिनको मन प्रसन्न भयो ।

हिजोको चिन्ताले र तीन छाक भात नखाएको हुनाले केशवराजलाई निकै गालेछ । सिंढी चढ्दा दुईचोटि बिसाउनु पर्‍यो । कोठामा पुगेर थाकेको हुनाले उनी बिछ्यौनामा पसारिए । बुइगलमा नअटाई माथि जाने बाटो नपाई भान्साघरको धूवाँ केशवराजको कोठामा रङ्मगिइरहेको थियो । तिनले सुतीसुती उँधो मुन्टो लाएर चिच्याए– "कति धूवाँ पारेको ?" तिनकी पत्नीले माथिबाट कुन्नि के भनिन् केशवराजले सुनेनन् र सुन्न पनि खोजेनन् । चिच्याउँदा बल परेर तिनी स्वाँ स्वाँ गर्न थाले । असाध्यै नाताकत भएछ । तिनको मनमा हिजोको विचार खेल्न थाल्यो । अहिले बिहान जर्साबसँग माफी मागेको दृश्य आँखाका समक्ष झलझल नाच्न थाल्यो । "बुझें, बुझें, म त्यति पनि बुझ्दिनं र, तिमी त बडा अनौठाका मानिस रहेछौ । यस्तो जाबो कुरामा............।" धूवाँको एउटा मुस्लो सिंढीमा लडीबुडी खेल्दै

एउटा डल्लो भएर तिनको कोठामा आई फुट्यो । कोठा अँध्यारो भयो, तर केशवराज प्रसन्न थिए । माथि 'बूढी' लाई दाउरा नबलेर कति कष्ट होला ! विचरीले यसै गरी दुःखसँग जीवन बिताउनु पर्छ । केशवराजले भान्से वाहुन वा बाहुनीसम्म राख्न सकेका छैनन् ।

आफैं पनि केशवराजले सुख पाए र ? दुलही घरको दुःख खेप्छिन्, तिनी बाहिरको । बिहान चाकरीमा दगुर्नु पर्छ, दिउँसो दुई बजेदेखि फेरि चाकरीमा गयो । अरू केही काम छैन । चाकरीको घोडेयात्रा छ ।

कहिले त 'जर्साब" नजरसम्म पनि हुन्न...... केशवराजलाई ग्लानि भयो ।



# बिहा

सुब्बा कटकबहादुरले १४ वर्षकीलाई बिहा गरेर घर लिएर आए। भन्नु पर्ने कुरा यति हो, र कटकबहादुरलाई नचिन्ने योभन्दा धेरै कुरा सुन्न पनि चाहँदैनन्। तर मलाई १४ वर्षकी भन्नासाथ केटीको विषयमा जान्ने रहर लाग्छ, सुब्बा कटकबहादुर निश्चय नै छिप्पिएका होलान् मैले सानो उमेरको सुब्बा देखेको छैन। भरसक यो उनको अर्को बिहा हो– पहिलेकी दुलहीबाट दुईवटा छोरा होलान्, र उसको मृत्यु भएपछि यी १४ वर्षकीलाई बिहा गरेको होला। कटकबहादुरलाई त के छ, विवाहको क्षेत्रमा खग्गु र निपुण भैसकेको मानिसलाई दिनभरि अड्डामा बसी कलम घस्दा र अड्डा साथीभाइसँग ख्याल ठट्टा गर्दा शायद नै १४ वर्षकी हरिमतीको ध्यान आउँदो हो। तर हरिमती भर्खरै १४ वर्षकी बिहाको अर्थ बुझ्न नसक्ने उमेरमै बिहाको अनुभव गर्न थालेकी हरिमतीको कुरा नै भिन्नै होला।

मैले एउटा बिहा देखेको छु म जन्तीपट्टि थिएँ। हामीहरूलाई ४ बजेको निम्ता थियो तर जन्ती ८ बजेभन्दा पहिले निस्केनन्। हामीहरू बाहिर बसीबसी जन्ती निकाल्ने उद्योगमा थियौं, तर दुलहाले नै अबेर गरे। उनी सिंगार पारिरहेका छन् रे, विवाहको अवसरमा एकचोटि सिंगारिने मौका पाइन्छ भनी हामीहरू चूप लागी उनको प्रतीक्षा गरिरहेका थियौं। मैले दुलहालाई देखेको थिइनँ। कस्ता होलान्? गाउँका स्वास्नीमानिसहरू पनि आएर उभिरहेका थिए; तिनीहरू पनि दुलहालाई हेर्छन रे, कस्ता होलान्? दुलहा भन्नासाथ २०/२२ वर्षको युवकको कल्पना हुन थाल्छ, र ती ग्रामीण रमणीहरू

पनि यस्तै दुलहाको कल्पना गरी हेर्न उभिरहेका होलान्। धेरै बेर पछि ढोकातिर खलबली भयो। "दुलहा आए, दुलहा आए" भनेर सब उतातिर ओइरिन लागे तर मैले चिन्न सकिनँ; कुन चाहिने दुलहा हुन्। सब छिप्पिएका उमेरका मानिसहरू ढोकाबाट बाहिर निस्के। यसै ठम्याउन नसके पनि पहिरनले ती कालो कोट लाउने नै दुलहा हुन् भनी ठानें। नभन्दै तिनै रहेछन्। आफ्नो खुशी र सुखलाई नदेखाऊँ भन्दाभन्दै पनि उनको आकृति, चलाइ र बोलाइले नै तिनी दुनियाँका सबैभन्दा सुखी मानिसजस्ता देखिन्थे।

ठिक ८ बजे जन्ती घरबाट बाहिर निस्क्यो। दुलहा हात्तीमा चढे औ हामीहरू पैदल हिंड्यौं। मलाई दुलहा देख्नासाथै दुलहीको ध्यान आउन थाल्यो। दुलही पनि त्यस्तै ३५ र ४० की ढोकाबाट निस्की भने सारा उत्साह व्यर्थ हुनेछ। तर सानी, १४ वर्षकी निस्की भने ?। मैले यसो हात्तीमा चढेको दुलहातिर हेरें र मैले नजीकै हिंड्ने एउटा भद्र मानिसलाई सोधें–

"दुलहाको यो पहिलो बिहा हो ?"

उसले उत्तर दियो "अहँ"।

"पहिलेकी दुलही नि ?"

"ऊ मरेर त यी अर्को बिहा गर्न हिंडेका। यिनको पहिलेकी दुलहीबाट दुईवटा छोरा छन्। घरमा स्वास्नीमानिस नभएर घर नचल्ने, त्यसमा पनि छोराहरूलाई हेरिदिने कोही नहुँदा यिनले बिहा गर्नु परेको।"

दुलहापट्टि बाट निश्चिन्त भै म दुलहीको कल्पना गर्न थालें। दुलहाको त घर चलाउनु थियो, ती सानासाना केटाकेटीहरूलाई हेरिदिने मानिस ल्याउनु थियो र बिहा गरे। तर यिनको घर चलाउने र यिनका छोराछोरीलाई हेरिदिन आउने दुलही कस्ती होलिन् ? ती निश्चय नै बढेकी होलिन्। नत्र कसरी घर चलाउलिन्। कसरी छोराछोरीलाई हेर्लिन् ? उनलाई पनि थाहा होला– कस्तो घर छ र कस्ता केटाकेटी छन्। म दुलहीको विषयमा पनि निश्चिन्त भएँ र दुलहीको घर पुग्ने बखतमा मलाई फेरि उत्साह आउन थाल्यो। नाचगानमा उहाँको उत्साहमा म पनि खूब सामेल भएँ र दुलही

निकाल्ने वखतमा हतपताई मण्डपमा आएँ । त्यहाँ पनि दुलहीलाई हेर्न आउने मानिस खचित थिए । गाउँका स्वास्नीमानिसले मण्डप घेरिएको थियो । तिनीहरू कस्ती दुलहीको कल्पना गरिरहेका होलान् ? २५/३० वर्षकी, घर चलाउने काममा निपुण, बढेका दुई छोरालाई हेर्न सक्ने, दुलहाको सारा व्यवहारलाई थाम्ने दुलहीको कल्पना गरिरहेका होलान् । म त यस्तै दुलहीको कल्पना गरिरहेको थिएँ । तलदेखि माथिसम्म रातो लुगाले छोप्पिएकी एउटी सानी वालिकालाई डोऱ्याउँदै, ठेल्दै २/३ स्वास्नीमानिस मण्डपमा पुगे । यहाँ पनि मेरा कल्पनाले मलाई धोखा दियो । म त्यो देखी विरक्त भएँ । मैले विचार गर्न सकिनँ । कसरी यी १४ वर्षकी कलिली वालिकाले दुलहाको घर थाम्लिन् र उनका छोराहरूको हेरविचार गर्न सक्लिन् । म यी वालिकाको विषयमा गम्न थालें– यिनी दूलहाका घरमा कसरी बस्लिन् ? यिनको र दुलहाको कस्तो सम्बन्ध रहला ? अहिले यिनी के सोच्न थालेकी होलिन् ? इत्यादि । त्यसपछि मैले कुनै बिहामा जाने साहस गरिनँ । मलाई अब पनि बिहा हेर्ने रहर लाग्दैन ।

र जब मैले सुब्बा कटकबहादुरले १४ वर्षकीलाई बिहा गरेर लिएर आए भनेको सुनें मलाई यो बिहाको स्मरण भयो । हरिमतीमाथि मलाई त्यसै दया आयो । हरिमती सुखी छन् कि दुःखी छन्– मलाई थाहा छैन तर मलाई त्यसै हरिमतीमाथि सहानुभूति हुन्छ । हरिमतीले दुलहा भनेको सुनेकै होला; बिहाको विषयमा उसका साथीहरूले उसलाई जिस्क्याउँदा रहर नै लाग्यो होला । उसले पनि आफ्नो दुलहाको कल्पना गरेकी होली । उसले पतिको कस्तो कल्पना गरेकी होली ? जवान कि कटकवहादरजस्तै छिम्पिएको ? कि आफूजस्तै सानो केटो ? त्यसपछि के ठानेकी होली ? कस्तो सुखको कल्पना गरेकी होली ? मीठो खान पाइएला, राम्रो लाउन पाइएला वा वाजागाजासाथ डोली चढी हिंड्न पाइएला भन्ने सुखको कल्पना गरेकी होली ?

विहा गरेर घरमा आएपछि हरिमतीको कल्पना सत्य कि झूटो ? कटकबहादुर र हरिमती कस्ता कुरा गर्दा होलान् ?

कटकवहादुरले बिहा गरेकै राती हरिमतीलाई भने होलान् "मेरी रानी ।" –हरिमती झसङ्ग हुन्छिन् । धेरै दिनको कुरा होइन ।

एकादिन छिमेकका केटाकेटीसँग खेल्दा त्यो रानी बनेकी थिई र एउटा केटो राजा तर यत्रो ठूलो मान्छेले उस्तै खेलवाड गरेको देख्दा हरिमतीलाई राम्रो लागेन । छक्क परेकी हरिमतीलाई नजीकै टाँसेर कटकले सोधे "मेरी रानी, मलाई माया गर्छ्यौ ?"

"माया गर्छु" भनिदिंदा उनी खुशी हुन्छन् भनेर हरिमतीले गर्छु भनिन् ।

"म्वाई देऊ न त" कटकले आग्रह गरे । यहाँ हरिमतीको आश्चर्यको सीमा रहेन, र मेरो पनि । कटकबहादुरले के भनेर म्वाई खान खोजेको ? रानी भनेर कि दुलही भनेर ?

बल्लबल्ल आफ्नो मुखलाई उसको मुखबाट सारी हरिमतीले भनिन् "मलाई निद्रा लाग्यो, सुत्छु ।"

"यति चाँडै" प्रेमको यस्तो रूखो उत्तर पाउँदा कटकलाई ग्लानि भयो, उनी भन्दै गए "अरू कुरा गरौं न, सुत्न त सधैं सुतिहाल्छ्यौ नि ।"

हरिमती पहिले नयाँ घरमा आएर डराई । निद्रा लाग्दा सुत्न नपाउँदा पनि केही बोलिन र पतिको मुखतिर हेरिरही । कटकले गरेको कुरा उसले केही बुझिन, कुनै कुनै बुझेको पनि कि ता एकदम व्यर्थ कि हाँसोउठ्तो जस्तो लाग्यो ।

कटकबहादुरले १४ वर्षकीलाई विहा गरेर लिएर आए भन्ने सुन्दा मलाई यो सब कल्पना किन हुन थाले ? शायद हरिमती र उनीसँग यस्तो केही कुरा भएनहोला । उनले हरिमतीसँग प्रथम प्रश्न गरे होलान् "नानी, तिम्रो नाउँ के हो भन त ।"

यस्तो मिठो ढङ्गसँग सोधेको देख्दा नयाँ मानिससँग पनि नडराई हरिमतीले उत्तर दिइन् "हरिमती" ।

"तिमीले कति पढेको छ ?"

" कखरा सिद्ध्याई भर्खर सानासाना पुस्तक वाच्न थालेकी छु ।

"अबदेखि मसँग पढे, जाऊ अब निद्रा लाग्यो होला, सुत ।"

हरिमतीलाई सुताई ओढ्ने ओढाई उनी आफ्नो घरको हिसाब मिलाउन लागे होलान् । बिहान भएपछि उसलाई उठाउँछन्, नुहाउन लाउँछन् र खाजा खाएपछि एकछिन पढ्न भन्छन् र बिर्सिएको ठाउँमा आफैं सिकाउँछन् । खाइसकेपछि किताबहरू एउटा बासामा बाँधी सधैंको जस्तो हरिमती स्कूल जान्छिन् ।

तर म सोध्छु त्यसो भए कटकबहादुरले किन बिहा गरे ? छोरी नभएर छोरीको रहर पुऱ्याउन ? त्यसो भए ल्याएकै दिन बढेकी कन्याको बिहा गरिदिनु पर्ने पीर तिनीलाई थपियो होला ।



# हरिदत्त

हरिदत्त मेरो सहपाठी थियो । त्यसको चेहरा उसिनेको आलुजस्तो रक्तहीन थियो तर गालाको सबभन्दा उठेको स्थानमा दुइ-चार चायाका दाग थिए । त्यसको अनुहारमा डण्डीफोरले जति उपद्रव गर्न सक्थे, गरेर गएका थिए । त्यसो हुनाले त्यसको अनुहारभरि खाल्डा थिए– कसैले रीसमा हजार चोटि आक्रमण गरेको जस्तो । आँखा सानासाना थिए र त्यसले कसैतिर एकाग्रताले हेऱ्यो भने ती झन् साना हुन्थे र तीखा बाणजस्ता लाग्थे ! त्यो दुब्लो-पातलो थियो र मजस्तो थिएन । त्यसको लुगा लाउने विषयमा सार्वभौतिक मत थियो । त्यसो हुनाले आज धोती र अलखा लाएको देखियो भने भोलि ठिक्क अङ्ग्रेजले लाउने लुगा लाएको देखिन्थ्यो । आफूलाई सिंगार्न उसलाई काबुली मखमलको वेस्टकोट र सलवार र मद्रासी लुँगीसम्म चाहिन्थे । लुगाहरू धेरै वर्षपहिले बनाएका जस्ता थिए किनभने कोटको बाहुला चार अम्मल माथि हुन्थ्यो प्यान्ट चाहिं तरकारी किनेर ल्याउने थैलोजस्तो थियो । मखमलको वेस्टकोट स्वास्नीमानिसले लाउने भित्री चोलोजस्तो थियो, लुँगी त जुनसुकै धोतीलाई पारे पनि हुन्थ्यो । अङ्ग्रेजी लुगा लाएको दिन भने हामीहरूमाथि अलिक माथिबाट हेर्थ्यो र हामी पनि त्यसको अङ्ग्रेजीको धाक मान्थ्यौं– कुनै शब्दलाई बङ्ग्याएर बोल्ने कोशिश गर्दैनथ्यो । त्यसको वाक्यमा स् स् स् को बाहुल्य हुँदैनथ्यो । के त्यसको देब्रे हात प्यान्टको बगलीमा हुँदैनथ्यो र दाहिने हातले सानो बेतको छडी घुमाउँदैनथ्यो ?

जाडोजाडोजस्तो दिन थियो । विहानदेखि आकाश मेघाच्छन्न थियो । हामीले आफ्नो आफ्नो बाकसबाट कोटहरू झिक्तै लाउन थाल्यौं

र हरिदत्तले त्यै टिम्म परेको कोट र धोक्रोजस्तो प्यान्ट लायो । स्कूल लाग्न अझै आधा घण्टा बाँकी थियो, त्यसो हुनाले हामी स्कूलको अगाडिको चउरमा बसेर गफ गरिरहेका थियौं । टाढाबाट हरिदत्त आउन लागेको देख्यौं प्यान्टको वगलीमा देब्रे हात हालेर, दाहिनेले छडी हल्लाउँदै (देब्रो हात भएको भए त्यसले चुरोट अवश्य लिने थियो) त्यसले कसरी हाम्रो भाव जानेछ र भन्यो "यो सुट गुलाम मुहम्मदले सिएको, ठट्टा होइन । हिन्दूस्थानमा त्यस्तो राम्रो सिउने अर्को कोही छैन ! यो धोबीले पो धुँदा बिगारिदिएको, पफ कालरको कदर नै नगरी इस्त्रीले थिचिदिएछ हेर.........।" कालरमा भएको इस्त्रीको प्रकोप देखाउन थाल्यो । सिउनी तानिएर सेतो धागो देखिन लागेको रहेछ ।

हामीहरू हतपती त्यसको कुरामा अविश्वास गर्न सक्दैनथ्यौं । किनभने त्यो एउटा धनीको घरमा वस्थ्यो । त्यसकी बहिनी हो कि दिदीलाई त्यस धनीले राखेको थियो । त्यसो हुनाले त्यो ठूलो दरबारजस्तो घरबाट निस्कने हरिदत्तले यस्तो विषयमा, जसमा धनको व्यय हुन्छ, केही कुरा भन्यो भने हामीहरू धेरैजसो पत्याउँथ्यौं ।

मेरो घरमा त्यो सधैं आउँथ्यो । कहिलेकाहीं पैसा पाएको दिन मिठाई ली आउँथ्यो, हामीले खाई नसकेको एक-दुई टुक्रा मिठाई "लौ अब रहेको पार्वतीलाई दिऊँ" भनी त्यो भन्थ्यो ।

पार्वती मेरी नोकर्नीकी छोरीको नाउँ थियो । उसको सम्पत्ति दिन खोजे मेरो के लाग्थ्यो ? पार्वतीलाई म बोलाउँथें । हरिदत्त भन्थ्यो, "तैंले पार्वतीलाई दिएस् ।" म भन्थें "तैंले ल्याएको मिठाई तं नै दे ।" त्यसै बखतमा पार्वती लाज मानेर मेरो कोठामा आउँथी र म मिठाईको पोको उसको हातमा हालिदिन्थें । हरिदत्तचाहिं मैले दिएको र पार्वतीले समातेकी हेरिरहन्थ्यो ।

एक दिन त हातमा मसला हालेको दूधको ठूलो भाँडो र अर्कोमा मिठाईको पोको लिएर त्यो आयो । "यो दूध म आज आफैं पार्वतीलाई दिन्छु" त्यसले भन्यो, "लौ उसलाई बोला त; त्यो मिठाईचाहिने हाम्रो ।" मैले पार्वतीलाई बोलाएँ । ऊ आएपछि हरिदत्तले दूध आफ्नो हातले दिन सकेन र मलाई भन्यो "तं नै दे ।"

दूध लिएर पार्वती गई । हामीहरूले बसेर मिठाई खायौं । आज उसकी दिदीले उसलाई एक रुपियाँ दिएको रहेछ, त्यो रुपियाँ पाउनेबित्तिकै मिठाई र दूध किन्न मात्र बाटामा विलम्ब गरेर ऊ सोभै मकहाँ आयो । मिठाई खाएर हामीहरू डुल्न निस्क्यौं । हामीहरू केही पर पुगेका थियौं हरिदत्त टक्क अडिएर मेरो काँधमा हात राखेर भन्न थाल्यो "म पार्वतीलाई प्रेम गर्छु ।"

म छक्क परें ।

त्यो भन्दै गयो "अब मेरो तिमी सहायता गर ।"

म आत्तिएँ ।

"तिमी दोस्त हौ । मित्रको अब कर्तव्य गर । मित्र ज्यानसम्म दिन तैयार रहन्छ । मैले आफ्नो रगत बगाएर तिम्रो केही भलो हुन्छ भने म आफ्नो रगतसम्म बगाउन तत्पर छु ।"

दोस्तीको यत्रो ठूलो कर्तव्यका सम्मुख म निरुत्तर भएँ । यसमा उसको कसरी भलो हुन्छ भनेर सोध्नु त्यो बेला तुच्छ ठहराएँ । मैले मित्रका रूपमा सबै कुरा गर्न तयार हुनु पर्‍यो । तर शक्तिभन्दा बाहिरको कुरा भए नि ?

मैले सोधें "म कसरी तिम्रो सहायक हुन सक्छु र ?"

"त्यो तिम्री नोकर्नीको छोरी हो । तिमी जे पनि गर्न सक्छौ", बडो सजिलैसँग त्यसले भन्यो । म परें बडो पेचमा । मित्रको कर्तव्यबाट च्युत हुन मन पराउन्नथें । तर कसरी हरिदत्तको सहायक हुन सकिन्छ मलाई थाहा थिएन ।

भोलिपल्टदेखि हरिदत्तले मलाई आफ्नो प्रेमको व्यापकता र निस्वार्थतामा वक्तृता दिन थाल्यो र मेरो कर्तव्यतिर मेरो ध्यान आकर्षित गर्न थाल्यो । तर म आफ्नो ध्येयमा सफल हुन सकिनँ । जस्तै आँटिर चेष्टा गरे तापनि म पार्वतीलाई हरिदत्तको त्यसका प्रतिको प्रेमविषयमा केही भन्न सक्तिनथें । बिस्तारै बिस्तारै हरिदत्तको सदाको उपदेशले गर्दा म आफूलाई मित्रोचित कर्तव्यबाट च्युत भएँ भनी ठाँन्न थालें । मलाई हरिदत्तको सम्मुख पर्ने साहस हुन छोड्यो ।

परीक्षाको दिन पनि नजीकै थियो, हामी पढाइमा लाग्यौं । म पास भएँ, हरिदत्तले हामीलाई निराश गरेन, फेल भयो । परीक्षाफल

निस्केको दिन हरिदत्त मकहाँ आयो र भन्न थाल्यो "मलाई थाहा थियो म फेल हुन्छु। पढेको भए पो पास हुनु। पढ्न सकेको भए पो पढ्नु। पार्वतीको प्रेमले गर्दा रातभरी निद्रा लाग्दैनथ्यो। प्रेममा परेर केही काम गर्न सक्तैन। लैला मजनूको कथा पढेको छैन ? म त मजनू थिएँ, पढ्नामा कहाँ मन अडकाउन सक्थें। फेरि आजकालको पढाइमा कहाँ मन लाग्छ र ? किताबको कीरा बन्यो, दुनियाँको सुखदेखि अलग्ग रह्यो र पछि खूब गर्न सक्यो भने ४० रुपियाँको नोकरी गऱ्यो। आजकालको स्कूलको पढाइ त बेकामको हुन्छ।"

मलाई आफू पास भएको हुँदा खुशी हुनु त कहाँ, त्यसको कुराले झन् लाज लाग्यो। हरिदत्त चाहिने पास भएको जस्तो गरेर जीवनको कार्यक्रम स्थिर गर्न थाल्यो।

"अब म यो स्कूल छोड्छु। मैले कमर्स पढ्ने निश्चय गरेको छु। कमर्सले व्यापारमा काम दिन्छ, व्यावहारिक जीवनमा मद्दत हुन्छ। यो स्कूलमा कमर्स छैन। हालैमा कमर्स सिकाउने स्कूल खुलेको छ, त्यहीं नाउँ लेखाउँछु। तिमी बी. ए. पास गऱ्यौ भने हद्द ४० रुपियाँ पाउला। कमर्समा सफल भइयो भने" हात पसारेर फल टिप्न मात्रै बाँकी छ भने झैं गरेर मलाई आफ्नो परीक्षाको सफलतामा लज्जित पार्दै काबुली लुगा लाएको हरिदत्त बाहिर गयो।

धेरै दिनपछि त्यसको र मेरो भेट भयो। एउटा ठूलो सभामा म गएको थिएँ, त्यो पनि त्यहीं थियो। यो सभा बेकामको बकवादी कुरा गर्नको निमित्त बोलाइएको छ भनेजस्तो गरेर ह्वार्लाङ्ग ह्वार्लाङ्ग सुरुवाल लाएको हरिदत्त सभाको वास्ता नगरेर टाढै उभिएको थियो। मैले त्यो भएनेर गएर कुरा कुरामा त्यसको कमर्सको पढाइको विषयमा सोधें। बडो तिरस्कारको दृष्टिले मलाई हेरेर उसले भन्यो "तिमी त किताबका कीरा भैसकेछौ। देशमा यत्रो हलचल मच्चिरहेको छ। हजारौं देशभक्त जेलमा परेका छन्। यो बखतमा तिमी आफ्नो कर्तव्यको सीमा किताबभित्र छ भनी ठान्छौ। किताब-सिताब फ्याँकेर मैले सार्वजनिक क्षेत्रमा प्रवेश गरें।"

मलाई समातेर कोही नभएको कुनामा लगेर बिस्तारै भन्न थाल्यो "अब हामीले पिस्तोल, बन्दूक जम्मा गर्नु पऱ्यो । तिमी पहाडमा बस्छौ, त्यहाँ हाम्रो खजाना बनाउनु पर्छ ।

मैले डराएर चारैतिर हेरेर भनें "बन्दूक, पिस्तोल त्यहाँसम्म पुऱ्याउने कसरी ? पुलिसको आँखा कसरी छल्ने ?"

हरिदत्तले सजिलैसँग भन्यो "छी, छी चिनीको बोरामा म हतियार भरेर चलान गरौंला, तिमी त्यहाँ पुगेपछि तिनलाई एक ठाउँमा जम्मा गर्नू । कसैलाई शङ्का नै पर्दैन । चिनीको बोरामा पिस्तोल छ भन्ने कसलाई थाहा ? ऊ, त्यो गुप्ती पुलीसको इन्स्पेक्टर हो । ऊ हेर उसको दृष्टि ममाथि छ । हाम्रो जीवन त चौबीसौं घण्टा खतरामा रहन्छ । काला पानीमा जीवन बिताउनुपर्ने हो कि फाँसीको डोरीमा झुण्डिनुपर्ने हो । तर देशको निमित्त मैले त आफ्नो शरीर अर्पण गरिसकेको छु ।"

त्यसै बखतमा एउटा मान्छेले आएर त्यसको हात समातेर त्यसलाई लग्यो । जाँदाजाँदै त्यसले मलाई सम्बोधन गरेर भन्यो "हेर है, मैले भनेको नबिर्सनू । अहिले मलाई फुर्सत छैन । यी, काममा हिँडिहाल्नुपऱ्यो, पछि भेट भएमा सारा प्लान छलफल गरौंला ।"

एक दिन कोर्टबाट फर्केर म आफ्नो कोठाको झ्यालबाट तल सडकमा हेरिरहेको थिएँ । सामुन्नेको बाटोबाट हरिदत्त आइरहेको थियो । मैले कराएँ हरिदत्तले उँभो मुण्टो लाएर हेऱ्यो । मलाई देखेर आफ्नो सारा दाँत देखाएर हाँस्यो । म तल झरें र त्यसलाई लिएर माथि आएँ ।

यतिका दिनले– ७८ वर्षले उसको अनुहारमा केही परिवर्तन पारेको थिएन । मलाई ता आफू धेरै छिप्पिसकें जस्तो लाग्यो, तर ऊ त जस्ताको तस्तै, केवल अलिक दुब्लाएको, पहेंलो मुख झन् पहेंलो भएको सानासाना आँखा, झन् तल भासिएका ।

मैले सोधें "तिमी यहाँ कहाँ ?"

उसले पहिले मेरो कोठाको चारैतिर आँखा घुमायो । बिस्तारै एकएक कुरामा उसको दृष्टि अड्ग्यो, पछि उसको दृष्टि एउटा चोलोमा

पऱ्यो जो भूलले वा असावधानीले बिछौनैमा छुटेको थियो ।

"त्यो को" –चोलोलाई देखाएर हरिदत्तले भन्यो ।

"मेरी पत्नी" मैले त्यसको हात समातेर त्यसलाई सोभ्रै बिछौनामा तानेर बसाल्दै भनें । चोलीलाई एउटा कुनामा हुऱ्याएँ ।

"तिम्रो त विहा भएछ, पैसा पनि कमाउँछौ क्यारे........।" उसले फेरि कोठामा चारैतिर हेऱ्यो ।

मैले सोधें "तिमी यहाँ के गरिरहेछौ ?" "म त व्यापार गर्न आएको छु, आजकाल चियाको व्यापार गर्छु ।" विस्तार विस्तार उसलाई आफ्नो पुरानो जोश र उत्साह आउन थाल्यो "चियाको व्यापारमा आजकाल खूब धन छ । लिप्टनले, ब्रुक्बोन्डले करोडौं रुपियाँ कमाए । अरू व्यापारमा हानिको डर हुन्छ, यसमा त हानिको डरै छैन, नाफा मनग्गे छ......।"

मैले फेरि सोधें "यहाँ कहाँ बसेका छौ ? तिमीलाई फुर्सत भए डुल्न जाऔं ।" उसले प्रस्ताव गऱ्यो "भोलि आएर तिम्री श्रीमतीसँग भेटूँला । अहिले त मलाई फुर्सत छैन । व्यापारमा समयको बडो मूल्य छ । मसित हिँड । म जान तैयार भएँ ।

कुन कुन कोप्चा र अँध्यारो गल्ली हुँदै यस्तो गल्लीमा मलाई लिएर गयो, जहाँ सूर्यको किरणको कहिले प्रवेश भएको नहोला । त्यही गल्लीको उपयुक्त एउटा घरभित्र हामी पस्यौं । त्यसले एउटा कोठा लिएको रहेछ, त्यही कोठाको बारदलीमा उसको भान्साघर रहेछ, एउटा दमचुलो, पानीमा डाडिएका भातका सिता, नमाभ्रेको थाल र पानी हालेर निभाएको कोइलाले बारदली नै भान्साघर हो भन्ने प्रमाण दिइरहेका थिए । बस्ने कोठामा तीनवटा बोराभरि चिया थियो, एउटा बोरा त खुलेको थियो, दुईवटा सिएका थिए । कोठाभरि चियापत्ती छरिएका थिए र चियाको गन्ध कोठामा रँगमगिएको थियो । माथिको तख्तामा छापेका कागतका मुठा थिए, जसको दुइ तीन पाता तल भरेर चियाको साथसाथ हाम्रो पादले मदित हुन्थे ।

कोठाभित्र पसेर उसले मलाई बस्ने इशारा गऱ्यो । आफू मेरो स्वागतमा चिया बनाउने तर्खरमा लाग्यो । मैले खसेको कागतको पाता

टिपें । चियाको विज्ञापन रहेछ । सबभन्दा माथि एउटी केटीको तसवीर थियो ।

हरिदत्तले बारदलीमा चूल्हो सल्कायो । त्यसको धूवाँ कोठामा भरिन लाग्यो । बारदलीबाटै चूल्हो फुक्तैफुक्तै हरिदत्त भन्न लाग्यो "चियाको व्यापारको केन्द्र बङ्गाल हो । चीनमा चिया हुन्छ तर हिन्दूस्तानको चियाको जस्तो माग दुनियाँमा छ, त्यस्तो चीनको चियाको छैन । दार्जीलिङ्को चिया दुनियाँमा नामी छ । यस व्यापारपट्टि मेरो ध्यान आकर्षित गर्ने एउटा गुजराती सज्जन हुन् । म बम्बईमा थिएँ ।"

जब चियाको पानी पाक्न थाल्यो । त्यसले मनेर आएर भन्यो "दूध र चिनी त छैन । मेरो त त्यसै खाने बानी छ । चियामा चिनी र दूध हाले चियाको स्वाद के नि ? तर तिमी त चिनी दूध नहाली खान सक्तैनौं कि ? मसँग त अहिले एक पैसा पनि छैन ।"

मैले पैसा झिकेर दिएँ । ऊ कुद्दै गयो र दूध र चिनी लिएर आयो । बिहान पकाएको एउटा मोटो रोटी एक टुक्रा मलाई समात्न दिएर अर्को आफैंले लिएर गिलास र एउटा कचौरामा चिया लिएर आयो । मैले गिलासको चिया समातें । चिया खाँदा कुरा हुन थाल्यो । हरिदत्तले सोध्यो "तिमी कुन चिया खान्छौ ?"

मैले भनें "लिप्टन ।"

"लिप्टनको कुन ब्रान्ड ?"

"हरियो लेवल ।"

यहाँ उसले ज्ञान देखाउने मौका पायो, लिप्टनको चिया त चुत्थो हुन्छ । खालि विज्ञापनको भरले उसको बिक्री हुन्छ । सबभन्दा असल ब्लेन्डिङ त ब्रुकबोन्डको हुन्छ । लोप्च्यू ब्रान्ड खाएका छौ ? तर मेरो चियाको गन्ध सबभन्दा असल छ ।" विज्ञापनको कागत उठाएर मलाई देखाउँदै भन्न लाग्यो "यो कसको तसवीर हो, चिन्यौ ? राम्ररी हेर त । ब्लाक राम्रो बनेन, अलिक अनुहार मिल्दैन । सफा छपाइ पनि छैन । पार्वतीको हो, चिनेनौ ? जब ती गुजराती सज्जनले मेरो ध्यान चियापट्टि चाकर्षित गरे, म सँग त पैसा थिएन । यसो हुनाले दाजुको ३०० रुपियाँ चोरेर नै भन्नुपर्‍यो लिएर आएँ । त्यसैले चिया किनेर यो

विज्ञापन छपाएं । मेरो कम्पनीको नाउँ पारू हो । मेरो पार्वतीप्रतिको भावनालाई अमर पार्न उसको नाउँमा मैले यो कम्पनी खोलें । सच्चा प्रेम यो हो........। पार्वती आजकाल कहाँ छे ?"

मैले उत्तर दिएँ "उसको विहा भयो । दुईवटा छोरा छन् । त्यै आउँथ्यो नि गोरो क्षेत्री, बाँसुरी बजाउने, कहिले कहिले मेरो काम पनि गर्थ्यो, रणवीर क्या ? हो, उसैसँग उसको विहा भयो, सुखैसँग होली ।"

हरिदत्त एक छिन चूप लाग्यो । एक छिनपछि फेरि भन्न लाग्यो "यै चियाको बलले मैले रुपियाँ कमाउनु छ । अहिलेसम्म त केही विकेको छैन । तर चिया नविक्न् यो हुनै सक्तैन । जसले मेरो चिया एकचोटि चाख्छ, उसले फेरि लिप्टन र ब्रुकबोन्ड केही मन पराउने छैन । व्यापार एकैचोटि हुने होइन । विस्तार विस्तार हुन्छ । व्यापारमा धन छ । बाबू अलिक दिन पर्ख । "यै, चियाले म लखपति हुन्छु ।" रोटीको आखिरी टुक्रा निलेर चियाको एक घुट्को खाएर उत्साहसँग हरिदत्त पैसा कमाएपछिको कार्यक्रम निर्धारित गर्न थाल्यो ।



# प्रेम

रामनाथ भुतभुताइरहेका थिए। दिनले आँखा उघार्न जानेन। यो एकोहोरो झरी। मधेशमा सुखा परिरहेको होला, यहाँ नचाहिने ठाउँमा पानी परिरहन्छ। रामनाथले ईश्वरको विवेकमा शङ्का गरे।

तर काममा नगै नहुने। कोट लाएर छाता टिपेर बाहिर ढोकासम्म आए। पानी जिस्क्याउनलाई वर्षेजस्तो झन् दर्कन थाल्यो। बलेंसीबाट पानीको धारा बगिरहेछ। आकाश कालो-नीलो छ। रूखको पात र छानोको टिनमा पानीको थोपा खसेको अल्छीलाग्दो शब्द हुँदैछ। बाटो शून्य छ, मान्छेको नाउँमा कुनै मूसो देखिंदैन। वरपरका घर-वृक्षहरू पानीले चुटिएर टाउको निहुराइरहेछन्। चिसो बतास छिनछिनमा हुर्रिएर आउँछ, पानीका कण बातिन्छन्। रामनाथलाई यो दृश्यले न्यास्रो लाग्यो। उनलाई असाध्ये एक्लो भएको अनुभव भयो।

तर उनलाई काममा नगै नहुने। आज उनलाई नोकरी लत्याएर हिंडूँ जस्तो लाग्यो। यस्तो दिनमा पनि सुख नपाउनु, दिनहुँ अफिसमा धाउनु छ। कस्तो समाजको व्यवस्था ? मैले चाहिने आँधी-बेहरीको वास्ता नगरेर काममा घोटिनु, ती ठूलाठूला घर भएका सिरकमा गुटुमुटु परेर आँग दुखुन्जेलसम्म सुतिरहनु, संसारमा यही व्यवस्था छ। धनी धनमा लुटुपुटु गरिरहनु, गरीब आफ्नो हाड घोटून्। भन्छन् रूसमा धनी-गरीबको भेद छैन रे, कुन्नि साँचो हो कि झूटो हो। समाजको जति हानि धनीद्वारा हुन्छ त्यति अरू कसैद्वारा हुँदैन।

कहाँ पढेको जस्तो लाग्छ बरु हात्ती सियोको प्वालमा छिर्छ, तर धनी स्वर्गको ढोकाभित्र पस्न सक्तैन । रामनाथ रीसको झोकमा धनीको प्रति घृणाको भाव मनमा खेलाइरहेका थिए ।

सडकमा पानीको भल बगिरहेको छ, हिलैहिलो छ । पानीले ढाडिएर र हिला टाँसिएर तिनको जुत्ता गह्रौं भैरहेछ । गोडा चल्दा पनि कष्ट हुन्छ । माथिको आकाशको धारा छातालाई छिचोली थोपायोपा गरेर तिनको कोट र टोपीमा खसिरहेछ । धीरधाममुनि पुग्दा तिनको क्रोधको सीमा रहेन । म्युनिसिप्यालिटीले यति सानो बाटो बनाउन कति दिन लाएको ? म्युनिसिप्यालिटीका सब मान्छे अल्छी हुन्, पैसा धुत्न मात्रै जान्दछन् । ट्याक्स त कति छिटोछिटो असूल गर्छन् र यो जाबो बाटो बनाउन झींगा धपाएको जस्तो गरिरहेछन् । तीन दिन भैसक्यो, बाटो खनेर छेकेको छ, हिलै-हिलो, कति यहाँ चिप्ले होलान् । बत्तीको राम्रो प्रबन्ध छैन, पानीको उचित प्रबन्ध छैन तर कहलाउँछ शहरलाई प्रबन्ध गर्ने संस्था ।

अफिसमा पुगेर तिनले बत्ती बाले, किनभने अफिसमा यथेष्ट प्रकाश थिएन । एउटा कुनामा छाता थुनेर ठड्याए, त्यहीं छाताको टुप्पाबाट चुहेको पानीको दह जम्यो । कोटलाई झारेर काँटीमा टाँगे । कुर्सीमा बसेर कागत हेर्न थाले । काम त आज केही रहेनछ नि, तर सरकार भन्छ काम नभए पनि पैसा खाएपछि तैंले दुःख बेसाउनुपर्छ । जताततै तलदेखि माथिसम्म जुन काममा पनि, जुन व्यवस्थामा पनि बुद्धिहीनताको नै परिचय पाइन्छ । आज नआएको भए सिन्काको टुप्पो जति पनि कामको खती हुने थिएन । यो संसार छोडेर कतै जान पाए पनि हुन्थ्यो । यस्तो जाबो काम गर्नुभन्दा त मर्नु नै असल ।

काम नपाएर बाहुला कुहुनासम्म सारेर दुवै हातमा हत्केलाले पारेको कचौरामा चिउँडो गाडेर रामनाथ चिन्तामा परे । रमाले 'आउँछु' 'आउँछु' भनी लेखी पठाई तर अझ आइन । माइत गएपछि यी स्वास्नीहरूलाई घरको ध्यानै आउँदैन । जेठ-असार पनि सिद्धिन लाग्यो, घर आउने नाउँ लिन्न । पहिले त चाँडै नै फर्कन्छु भन्ने

चिठी आउँथ्यो । अहिले त्यो पनि पट्ट बन्द छ । घरको माया भए पो । ए, यता चिट्ठी नआएको धेरै भयो । सौं वार सौं वार आठ, मङ्गलवार नौ, बुधबार दश दिन भयो । चिठी बन्द छ । त्यो चिट्ठी नलेख्ने त होइन । कहीं विरामी त परिन । रामनाथ हात मिच्दै कुर्सीबाट उठेर कोठामा डुल्न थाले । विरामी भएको भए ससुराहरूले चिट्ठी लेख्नु पर्ने, खबर दिनुपर्ने । ती पहाडेहरूलाई यस्ता मौकामा चिट्ठी पत्र लेख्नुपर्छ भन्ने पनि थाहा छैन क्यारे । एक त साह्रो नभै तिनीहरू कुनै वेथालाई वेथै मान्दैनन् । तिनीहरूको अज्ञानताले कति हाम्रा पहाडिया भाइ बाँच्ने आयु लिएर आएका भए पनि मर्छन् । रमाको स्वास्थ्य पनि यता राम्रो थिएन । अलिक चिसो लाग्यो भने रुघा लागिहाल्यो । एकचोटि रुघा लाग्यो भने जरो, खोकी, छाती दुख्न थालिहाल्थ्यो । एक ठाउँमा बसेर त्यसको राम्ररी स्याहार गरेर असल डाक्टरको औषधी गराऊँ भनेको, यताउति गऱ्यो कामको लण्ठाले अझसम्म केही गर्न पाइएन । आफू पनि, ऊ मोरी उस्तै छ नि । यसो एक दुईचोटि औषधी ल्यायो भने खान्न । औषधी पनि कहीं मिठो हुन्छ । आफूले पनि त आफ्नो शरीरको विचार राख्नुपर्छ । अमिलो-पिरो नखा भनेको पट्ट टेर्नु छैन । मैले मात्र पीर मानेर के भयो ?

रामनाथ आएर फेरि विचार गर्न थाले "रामे नोकरलाई नखोसी भएन । काम भने राम्ररी गर्नु छैन, कुरा मात्र हाँक्छ, म एक्लै छु भने त त्यो दिनभरि कता अल्पिन्छ । काम पनि राम्रो जान्दैन । भाँडा माझेको तेलको चिल्लै रहन्छ । बाहुन भन्छन् भान्छाको जूठो पनि चोख्याएको हुँदैन । आफू बाहुन पनि कुन सुग्घरी छन् र ? कतिचोटि भन्यो सफा बस बाजे, साबुन दियो, लुगा धुन तर लागेको बानी कहिले छुट्थ्यो र ? मैलै रहन्छन् । रमा आएपछि यी सबलाई खोस्छु र नयाँ नोकर-चाकर राख्छु ।"

चार बज्नासाथ उनी कुर्सीबाट उठे, कोट लाए, छाता टिपेर अफिसबाट निस्के । पानी थामिएको थियो तर आकाश अझै मेघाच्छन्न थियो । दिनभरि ननिस्केका मानिसहरू पानी थामिनासाथ सडकमा निस्के । रामनाथ थाकेका थिए । घर पुग्नासाथ कहीं नगएर एकछिन

ओढ्ने ओढेर सुत्ने निश्चय गरेका थिए । उताबाट उनको एउटा साथी आइरहेको थियो । रामनाथले विचार गरे "अब त्यसले कति बेर उभ्याइराख्ने हो । यी साथीहरूका पीरले ।"

त्यो साथीले नजीकै आएर तिनको काँधमा हात राखेर भन्यो । "कताबाट रामनाथ, अफिसबाट ?"

रामनाथलाई रीस उठ्यो, यो बखतमा सबैलाई थाहा थियो, रामनाथ अफिसबाट फर्कन्छन् । तब यो कुरा सोध्ने के प्रयोजन ?

फेरि साथीले भन्यो "आज त दिनभरि पानी परिरह्यो ।" यो वाक्यले रामनाथको कन्सिरी तात्यो । छेउ न पुच्छरको कुरा गर्न त्यसले रामनाथलाई किन सडकको माझमा उभ्याइराखेको । दिनभरि पानी पऱ्यो, यो उसले रामनाथलाई किन सम्झाउनु पऱ्यो । काम न काज, साथी भन्दैमा........। रामनाथ चुप लागिरह्यो ।

बल्लबल्ल साथीसँग उम्केर उनी घर फर्के । ढोका उघार्न रामेले अबेला गऱ्यो । यहाँ उनको क्रोधको सीमा रहेन र उनले रामेलाई हान्न छाता उचालिसकेका थिए, रामेले टेबुलमाथि राखेको एउटा तारतिर आकर्षित गऱ्यो, हत्तपत्त उनले तारको खाम खोले, तार उनकी पत्नीको रहेछ । भोलि पुग्छु भन्ने समाचार थियो ।

रामेले थाहा पाइसकेको थियो यो तार कहाँबाट आएको । उसले किच्च दाँत देखाएर सोध्यो "बज्यै कहिले पाल्नुहुन्छ ?" रामनाथको अनुहार प्रसन्न थियो । उनले भने "भोलि; तर रामे कोठाहरू राम्ररी सफा गर् । उसले के भन्ली ? कूचो त ऊ गएदेखि तैंले लाएको छैन क्यारे । टेबुलमा (औंला दलेर धूलो टाँसिएको औंला रामेलाई देखाएर) कति धूलो जमेको छ के भन्ली ?" भन्दै उनी उठेर आफ्नो कोठातिर लागे ।

एक छिनपछि उनले रामेलाई बोलाए । रामे "हजूर" भन्दै पुग्यो । "देख्छस् तँ, भित्तासँग टाँसीकन राखेको आलमारी कोठाको माझमा उभिएको छ ।" रामे पुग्नासाथ रामनाथले भने "लौ यो आलमारीलाई त्यता राखूँ । त्यहाँ राखेको राम्रो देखिंदैन । टेबुल र कुर्सीचाहिं पलङको सिरानैनेर राख्नुपर्छ । लौ उता समात् तँ, राम्ररी समातेस् ।"

भात खाने वखतमा बाहुनलाई भने "भोलि मासु किनेर ल्याउनू। के एकै थरीको तरकारी किनेर ल्याउँछौ ? बजारमा यी बाहेक अरू तरकारी नै पाईंदैनन् कि......?"

भोलि बिहान उनको शरीरमा विचित्र फुर्ती थियो । जीउ हलुको जस्तो लाग्थ्यो । आकाशमा बादल थिएन र पगालेको सुनजस्तो सूर्यको किरण डाँडाकाँडामा छ्यापछ्याप्ती थियो । प्रसन्न भएर उनले बिछौनाबाट उठेर रामेलाई कराएर भने "रामे, रेल आउने कुन टाइम, हँ ?"

रामेले भन्यो "रेलबाट सवारी हुन्छ र ? मोटरबाट सवारी भए चाँडै आइपुगिन्छ ।"

रामनाथ परे द्विविधामा, मोटरबाट आए नि । कहाँ लिन जाने ? कहिले आइपुग्छिन् । त्यति तार दिन जान्नेले यसको पनि सूचना दिनु पर्ने । एकछिन कपाल कन्याएर तिनले रामेलाई अऱ्हाए "तँ चाँडै गएर मोटर आउने सडकमा उभिरह । मोटरबाट आएनन् भने, स्टेशनमा रेलमा लिन म जाउँला । रेल त १२ बजे आइपुग्छ, होइन ?"

"हजुर" रामेले उत्तर दियो ।

रामे जानै लागेको थियो, रामनाथले फेरि भने "फूलदानमा नयाँ फूलहरू राख, तँलाई त्यति पनि सुद्धी छैन, सात दिनदेखि एउटै फूल कुहाइराखेको छस् ।"

भान्साघरमा पुगेर बाहुनलाई सोधे "तरकारी के के ल्यायौ, बाजे......? आज अबेरै पकाए हुन्छ । उनीहरू कहिले आइपुग्ने हुन् ? झन् रेलबाट आए भने त १२ बजे पो आइपुग्छन् । अबेरै गरे हुन्छ, बाजे । खानेकुरा चिसो पार्ने के काम ?"

एक छिनपछि नुहाइसकेपछि उनी हातमा हात राखेर कोठाको माझमा ठिङ्ग उभिएर घोरिए "अब के गर्ने ?"

एकछिनपछि कोट लगाएर मोटर आउने बाटोतिर आफैं हेर्न गए । रामे सडकको छेउमा एउटा ढुङ्गोमा बसिरहेको थियो । मालिकलाई आएको देखेर उभियो ।

रामनाथले सोधे "अझ आएनन् ?" रामेले उत्तर दियो "मोटर त धेरै आए, तर खोइ उहाँको सवारी भएन ।"

एकछिनसम्म त्यहाँ उभिएर अब मोटरमा आउँदैनन् भन्ने निश्चय गरेर रामनाथले रामेलाई घर फर्काए "हेर, १२ बज्ने बखतमा छाता र बर्सादी लिएर तँ स्टेशन आउनू। म अहिले यहीं डुलिरहन्छु।"

रामनाथले आकाशतिर हेरे । फेरि आकाशमा बादल जम्मा हुन लागेको थियो । पानी पर्ने लक्षण थियो । उनी स्टेशनतिर लागे स्टेशनमा कोही मान्छे थिएन । कर्मचारीहरू कोठाकोठामा आफ्ना काममा व्यस्त थिए । प्लेटफार्म रिक्त थियो । तिनी एकछिनसम्म बेन्चमा गएर बसे। फेरि एकछिनपछि प्लेटफार्ममा डुल्न लागे। एकएक गरेर भित्तामा टाँसेको विज्ञापन पढ्न लागे । स्टेट्स्म्यान हिन्दूस्तानको सबै दैनिकपत्र भन्दा बढ्ता बिक्री हुने एउटा राष्ट्रिय पत्र हो, दुनियाँसँग सम्बन्ध राख्नु छ भने त्यसलाई पढ, हर्लिक्स दूध ताकत दिने पेय हो, साना केटाकेटीहरूलाई र रोगीलाई हर्लिक्स खुवाऊ। एउटा विज्ञापनमा केवल एउटा रातो गाला भएको खूब राम्रो स्वास्थ्य भएको वृद्धको हाँसिरहेको तसवीर थियो। धेरै गौर गरेर हेर्दा रामनाथले वेक्स बीयरको विज्ञापन रहेछ भनेर थाहा पाए।

एकछिनपछि स्टेशनको घडिसँग आफ्नो घडीको समय मिलाउन गर्न स्टेशनको घडी टाँगेको कोठानिर गएर उभिए। पाँच मिनट उनको घडी छिटो रहेछ । उनी फेरि प्लेटफार्ममा यताउति डुल्न थाले । एकछिनपछि फेरि गएर बेन्चमा बसे।

बिस्तार बिस्तार मान्छेहरू आउन थाले । टिन् टिन् टिन् सुनियो, गाडी आउने टायम हुन लाग्यो । उनी बेन्चबाट उठे। रामेले छाता र बर्सादी ल्यायो। रेल पनि कुइँय कराउँदै आइपुग्यो।

रामनाथको सबभन्दा पहिलो दृष्टि झ्यालबाट बाहिर टाउको झिकेर हेरिरहेकी रमामाथि पऱ्यो । उनी उतै लम्के । रमा गाडीबाट ओर्लिन्। माल रामेको जिम्मा छोडेर उनीहरू स्टेशनबाट बाहिर आए। त्यसै बखतमा पानी दर्कन थाल्यो । बर्सादी रामनाथले ओढेर छाता उघारेर दुलहीलाई ओढाउँदै स्टेशनबाट बाहिर आए । "हेर, तिम्रो स्वागतमा यो वृष्टि भएको पानीको फूलको" कवि हुने प्रयत्न गर्दै रामनाथले भने "नत्र अहिलेसम्म पनि नपरेको, तिमी पनि पुग्नु, पानी पनि पर्नु :" रामनाथले आफै यो तर्कमा गूढ सत्य देखे।

"भिजौली, छातामुनि हिंड न । हतार नगर है बाटो चिप्लो छ । यी हेर, म्युनिसिप्यालिटीले बाटो साँगुरो भयो भनेर माटो काटेर फराकिलो बाटो बनाउन लागेको छ । पहिले कति साँगुरो बाटो थियो, तीन हात जति बढ्ता चौडा बनाउने भएछन् । हेर न, त्यहाँसम्म माटो काटेको छ । यत्रो ठूलो बाटो एक दुई दिनमा बन्ने हो र ? अझै दश पन्ध्र दिन लाग्ला । रात-दिन त मान्छे यसमा लागेका छन्.......... भन्दै थिएँ नि चिप्ल्यौली................ लौ, मलाई समाती समाती हिंड ।"

रामनाथ एकचोटि अट्टहास गरेर हाँसे किनभने उनकी पत्नी स्वाम्मै हिलोमा गाडिइन् । एक छिनपछि आफै चिप्लिए । उघ्रेको छाता हातबाट छुटेर दुई तीन चोटि पल्टनबाजी खाएर सडकको बारमा गएर अड्क्यो , आफू थचारिए । उनकी पत्नीले खित्का छोडेर हाँस्ने मौका पाइन् । "ही ही ही ........... कत्रा माछा मारेको । " फेरि उत्तिखेरै उनले सोधिन् " चोट त लागेन ?"

रामनाथले उठेर छाता लिन जाँदै भने "अहँ, चोट त लागेन तर कसैले त देखेन ?" उनकी पत्नीले पछि फर्केर हेरिन् । बाटो शून्य थियो । कोही थिएन । फेरि पत्नीको हातमा आफ्नो पाखुराको ताल्चा मारेर हाँस्दै तिनीहरू तल झरे ।

कोठामा पुगेपछि रमाले भरियाले ल्याएको मालको निरीक्षण गरिन् । रामे ढोकानेर किच्च दाँच देखाएर उभिरहेको थियो । रमाले सोधिन् "रामेले कस्तो काम गऱ्यो ?"

रामेले झन् बत्तीसवटै दाँत देखायो । रामनाथले हाँसेर भने "सबै काम असल गऱ्यो । सब भियाउँथ्यो । राति मात्र कुन्नि कहाँ अल्पऱ्यो ।" एकपल्ट आँखा झिम्म्याएर तिनले पत्नीतिर हेरे ।

बाहिर पानी झमझम पर्दैछ । रामे भान्सातिर गयो । पत्नी नुहाउने तर्खर गर्न लागिन् । बाकस उघारेर धोती चोलो झिकिन् । रामनाथ उनीनेरै उभिरहेका थिए । पत्नीले सोधिन् "आज अफिस जानु पर्दैन ?"

"अँ आज............. को जावस् ?" पत्नीको टाउकोमा औंलाले हारमोनियम बजाएको जस्तो गरेर रामनाथले भने ।

रमा नुहाउन गइन् । रामनाथ खाटमा आएर बसे । उनको मन प्रसन्न छ । छिनछिनमा नुहाउने कोठाबाट पानी खन्याएको शब्द आउँछ । पत्नी नजीकै छिन्, त्यहाँ नुहाउन गएकी छन् । संसारमा बाँच्नुभन्दा सुखद कुरो केही छैन ।

भान्सामा तरकारी ओइरेको भ्वाईंय शब्द भयो । बाहुन केही भुट्न थालेछन् । नुहाउने कोठाको ढोका उघ्र्यो । धोती बेरेर मात्रै उनकी पत्नी त्यो कोठाबाट निस्किन् र आफ्नो कोठामा आएर धोती राम्ररी लाउन थालिन् । टेबुलमाथि साजी फूल मुण्टो हल्लाइरहेछन् । रामनाथ पल्टेर सब कुराको निरीक्षण गरिरहेका छन्, पत्नीले धोती लाएपछि चोलो लाइन् । नबोली रामनाथ उनीतिर हेरिरहे । चोलो लाएर उनकी पत्नी दुलहानेर नै खाटमा आएर बसिन् । पत्नीको शरीरको स्पर्श हुँदा भित्रदेखि रामनाथले अनुभव गरे बाँच्नमा नै संसारका सुखको सार छ ।



# कर्नेलको घोडा

कर्नेल कर्नेल्नीलाई असाध्य माया गर्थे । बुढेसकालमा बिहा गरेकी तरुनी स्वास्नीलाई कसले माया गर्दैन ? तर कर्नेल्नीलाई ४५वर्षको कर्नेलले गरेको मायाले पुग्दैनथ्यो । कर्नेल्नी थिइन् १९ वर्षकी। जैले पनि बाहिरबाट घर फर्कंदा दुलहीलाई सुखी पार्न केही न केही कुरो कर्नेल किनेर ल्याउँथे–साडी, पाउडर, लाली, चुरा, इयरिङ इत्यादि । तर तिनकी दुलहीको मन कहिले पनि दुलहातिर फर्केन । दुलहाले खुशी पार्न मायाले किनी ल्याएको मालमत्ताले भरिएको कोठामा एक्लै बसी कर्नेल्नी आँसु खसाल्थिन् । कत्रो आशा र उमङ्ग लिएर तिनीले दुलहाको घरमा पहिलो दिन पाइलो हालिथिन् । कत्रो सुख पाइएला भनेर तिनले आशा गरेकी थिइन् । कर्नेल्नी यी सबै पहिलेका कुरा विचार गर्थिन् र बिस्तार बिस्तार रुन्थिन् । बिहा हुनुभन्दा पहिले छिमेकीको एउटा युवकले तिनलाई प्रेमको निम्ता दिएको थियो । राम्रो थियो त्यो युवक हृष्ट-पुष्ट, त्यसको बाहु बलियो थियो । रहरलाग्दो थियो त्यसको शरीर । यो कुरा सम्झँदा तिनलाई अहिले पनि सिरिङ्ग हुन्छ । तर त्यस बखतमा आफ्नो भविष्यमा पाउने दुलहाको मिठो कल्पना गरेर त्यो युवकको निम्तालाई तिनले स्वीकार गरिनन् । अब छिनछिनमा त्यो युवकको सम्झना हुन्छ, त्यसको बलिष्ठ भुजाको ध्यान मनमा आउँछ । त्यसको बाहुको शक्तिको अनुभव गर्न पाउने अब तिनलाई रहर मात्र रह्यो । तिनले आत्तिएर कोठाका चारैतिर हेरिन्,

कोठाका मालमत्ताहरू तिनको खिसी गरिरहेजस्ता थिए। आफूलाई खुशी पार्न ल्याएको मालले घेरिएकी तिनी बन्दिनीजस्ती थिइन्।

त्यही बेलामा किनेका माललाई कुनै काखी च्यापी, कुनै हातैमा भुन्ड्याई कर्नेल कोठाभित्र पसे।

"हेर, मेरो प्राण, के के किनेर ल्याएको छु।" कर्नेलले मालको थुप्रो तिनको अगाडि राखेर भने।

कर्नेल्नीले उत्साहहीन दृष्टिले एकचोटि कर्नेललाई र एकचोटि मालमत्तालाई हेरिन्।

"मैले कतिचोटि हजूरलाई भनें मलाई यी सब मालमत्ता चाहिंदैनन्। व्यर्थ हजूर किन पैसा फ्याँक्नुहुन्छ ?" कर्नेल्नीले आँसु पुछ्दै भनिन्।

कर्नेलले मायाले सोधे "तिमी किन सधैं चिन्तित बस्छ्यौ ? तिम्रो त अहिले लाउने-खाने उमेर छ। तिमीलाई केको तकलीफ छ ? मलाई भन न।"

कर्नेल्नीले उत्तर दिनु व्यर्थ ठानिन्। तिनको कष्ट कर्नेल बुझ्दैनन्। १९ वर्षकी युवतीका मनको भाव ४५ वर्षको दुलहाले बुझ्दैन। कर्नेलले चूप लागेर बसिरहेकी दुलहीलाई मायाले उचाले तिनले भर्खरै विचार गरेको दुःखद भावनाहरूलाई बिर्सिन्। दुलहाको उमेरलाई बिर्सेर उनले आफ्नो शरीरलाई दुलहामाथि फ्याँकिन्। कर्नेलले तिनको भार थाम्न सकेनन् र तिनी पछारिए। दुलहीको सारा स्वप्नको तार एक्कासि चुँडियो। दुलहीलाई उठाउने प्रयत्नमा बल पर्दा स्वाँ स्वाँ गरिरहेको र पछारिएका दुलहालाई कर्नेल्नीले एकचोटि घृणाका दृष्टिले हेरिन्। त्यसै दिनदेखि कर्नेल्नीका मनमा आफ्नो दुलहाप्रति महान् तिरस्कारको भाव उदय भयो।

एकदिन कर्नेल र कर्नेल्नी आफ्नो हाताको निरीक्षण गरिरहेका थिए। कर्नेलले विदेशबाट झिकाई पाँचवटा गाई पालेका थिए। गोठघरमा धेरै बेरसम्म तिनीहरू गाई-वस्तुको निरीक्षण गरिरहे। गोठसँगै जोरिएको तबेला थियो। घोडाले हिनहिनाएको स्वर कर्नेल्नीले सुनिन् र सोधिन् "हजूरले घोडा पनि पालेको छ ? मलाई थाहा थिएन।"

कर्नेलले रहरसँग यो सेतो घोडा किनेको थियो। सधैं आफैं बसी दाना खुवाउँथे, आफैं उभिएर दिनहुँ त्यसलाई मल्न लाउँथे, र एकचोटि नित्य बिहान त्यसमा चढी हावा खान निस्कन्थे। तर यता यिनले घोडापट्टि उति ध्यान दिएका थिएनन्। त्यसमा नचढेको पनि निकै भएको थियो।

"हिंड न, जाउँ त्यसलाई हेर्न।" तिनले दुलहीलाई भने।

मालिकलाई आएको देख्ता घोडा अगाडिका दुवै टाप भूईंमा थचारी थचारी झन् हिनहिनाउन थाल्यो। अँध्यारोमा बाँधिएको त्यो घोडाको आँखा टलक्क टल्किरहेको थियो। हिनहिनाउँदा त्यसको नाकका दुवै पोरा फुलेर ठुला हुन्थे। त्यसका नसाहरू त्यसका गोडामा साँप बेरिएझैं लाग्थे। कर्नेल्नीलाई त्यो घोडा एउटा रहरलाग्दो कुरा जस्तो लाग्यो। जब तिनले त्यसलाई छुन खोजिन्, त्यसले तिनलाई छुन दिएन, गर्दन यताउति फ्याँकि टोकुँलाजस्तो गऱ्यो। घोडाको त्यस्तो स्वभावदेखि कर्नेल्नी डराइनन्, झन् आकर्षित भइन्।

"यस्तो बलियो घोडा रहेछ। यसको हेरविचार राम्ररी पुग्दैन क्यार।" तिनले भनिन्।

"पहिले किनेर ल्याएको ताक त म निकै यसको हेरविचार गर्थें, तर यता सइसमाथि यसको जिम्मा छाडिदिएको छु, त्यसैले यसको स्याहार गर्छ। कति सबतिर आँखा पुऱ्याउनु।"

कर्नेल्नीले भनिन् "म यसको जिम्मा लिन्छु। सइसको के भर ? दाना टाइममा दिन्छ कि दिँदैन। सइसहरू दाना चोरेर बेच्छन् पनि। आफूले पालेको बस्तुको आफैले स्याहार गर्नुपर्छ।"

कर्नेल मुसुक्क हाँसे, केही उत्तर दिएनन्। भोलिपल्टदेखि कर्नेल्नी आफै बसी त्यसलाई दाना दिन थालिन्। पहिले पहिले त घोडा तिनलाई आफूनजीक आउनै दिदैंनथ्यो, तर पछि आफ्नो मायाले तिनले घोडाको स्वभावमाथि विजय पाइन्। दाना खाइरहेको बेलामा कर्नेल्नी घोडाको नजीकै उभिएर त्यसको पिठ्युँमा हात राख्थिन्। घोडाको शरीर तिनका हातको स्पर्श हुनासाथ सिरिङ्ग हुन्थ्यो। घोडा दानामा गाडेको मुखलाई माथि उठाएर एकछिन

हिनहिनाउँथ्यो र फेरि मुख गाडी दाना खानमा व्यस्त हुन्थ्यो । एक दुइचोटि त्यो गोडा ठटाउँथ्यो तल ठोकेको पटाइमा टापको प्रहार पर्दा त्यो अस्तबलको निस्तब्धता भङ्ग हुन्थ्यो । झींगाहरूले घोडालाई पिरेछन् भन्ने कर्नेल्नीलाई थाहा हुन्थ्यो । घोडाको राम्ररी स्याहार पुऱ्याएको हुँदा तिनलाई सन्तोष थियो ।

कर्नेललाई यो कुरा मन पर्दैनथ्यो–दुलहीले यसरी घोडाको स्याहार गरेको । दिनमा एक दुइचोटि हेर्नु एउटा कुरा हो, दिनदिनभरि अस्तबलमै बसिरहनु सरासर मुनासिब होइन । सइस छँदाछँदै आफैं दाना खुवाउन किन जानु, आफैं घोडा मल्न किन थाल्नु ।

एकदिन कर्नेलले कर्नेल्नीलाई भने "कर्नेल्नी, तिमी कति घोडाको फिक्री गर्छ्यौ ? घरमा भान्सा के भो, कसो भो त्यसको तिमीलाई वास्ता छैन, घोडाको चाहिने त्यत्रो सुश्रूषा ।"

"म बाहुनी होइन भान्सामा ढुकी रहने । मलाई जे मन लाग्छ त्यही गर्छु । घोडाको हेरविचार गर्दा शान्ति पाउँछु, त्यति पनि तिमीलाई असह्य भयो ।" एक्कासि क्रुद्ध भएर कर्नेल्नीले भनिन् ।

"तिमीलाई केको दुःख छ र यो सबै कुरा मलाई सुनाउँछ्यौ ? तिम्रो मनमा केको अशान्ति छ र घोडाको सुश्रूषा गरेर तिमीलाई शान्ति ? तिम्रो मेराप्रति पनि त कर्तव्य छ नि, घोडालाई गरेको जति पनि कहिले एकछिनका लागि मेरो विचार गऱ्यौ ? साँचो भन्नुँ, मलाई त घोडादेखि ईर्ष्या छ तिम्रो चालाले कर्नेल्नी" कर्नेलले रुँलारुँलाजस्तो गरेर भने ।

कर्नेल्नीले केही उत्तर दिइनन्, घृणाले ओठलाई वक्र पारी दुलहामाथि दृष्टिपात गरिन् । बूढो उमेरमा पनि गहभरि आँसु पोरेको देख्ता तिनलाई त्यो दृश्य अत्यन्त नसुहाउँदो र घृणित लाग्यो । तिनलाई कर्नेललाई लत्याएर आफ्नो घृणाको परिचय दिने इच्छा भयो, तर आफूलाई काबूमा राखी तिनी त्यहाँबाट जुरुक्क उठेर हिँडिन् ।

एकदिन कर्नेल र कर्नेल्नी दुवै तबेलामा गए । कर्नेलले घोडामा चढ्ने इच्छा जाहेर गरे तर जबजब कर्नेल त्यसको नजीक जान्थे त्यो टोकुँलाजस्तो गर्थ्यो । कर्नेल्नी जाँदा हिनहिनाउन थाल्यो ।

कर्नेल्नी गएर त्यसलाई सुमसुम्याउन थालिन् । घोडाले हिनहिनाए गोडा भूईंमा हानेर आफ्नो कृतज्ञताको परिचय दियो ।

बडो कठिनाइसँग कर्नेल घोडामा चढ्न सके, तर घोडा तिनको वशमा हुन मानेन । अगाडिका दुवै टाप उठाएर आफू अगाडि नबढ्ने ढिपी गर्न थाल्यो । कर्नेल घोडा चढ्न निपुण थिए, तिनी लोट्न त लोटेनन् तर तिनलाई एक्कासि रीस उठ्यो र हातमा लिएको कोर्राले निर्दयतापूर्वक घोडालाई पिट्न थाले । घोडाको पिठ्युँमा कोर्राको एक चोट पर्नासाथ कर्नेल्नी "निर्दयी" भनेर कराउन थालिन् । घोडा कोर्राको चोट पाउँदा पनि नचेतेर अगाडि बढेन । कर्नेल सटासट आँखा चिम्लेर त्यसमाथि कोर्रा बर्साइरहेका थिए । घोडाले पछिल्तिरका दुवै गोडा फ्याँक्यो । घोडालाई पिट्नमा व्यस्त हुँदा लगाम तिनको काबूमा थिएन र तिनी उँधो मुण्टो भूईंमा खसे । तबसम्म कर्नेल्नी घोडासम्म पुगिसकेकी थिइन् । धूलोमा लटपटिएको दुलहापट्टि ध्यानै नदिएर तिनी घोडाको आङ सुमसुम्याउन थालिन् । घोडाको नाकका पोरा क्रोधले फुलेका थिए, तिनबाट पानी मिसिएको श्वास बगिरहेको थियो । घोडाले विजय पायो, शत्रु पराजित भएर भूईंमा पछारिएको थियो । घोडाको शक्तिका विषयमा कर्नेल्नीलाई केही शङ्का थिएन । घोडा तिनको लागि एउटा घमण्डको कुरा थियो । मायाले तिनले आफ्नो गाला घोडाको अयालले छोपिएको गर्दनमा राखिन् । तिनलाई पनि घोडा चढ्ने इच्छा भयो र रिकाबमा गोडा राखी सुरुक्क घोडाको पिठ्युँमा पुगिन् । दुलहा भूईंमा पछारिएकै थिए । आफू घोडामाथि चढी उनी महान् सुखको अनुभव गर्न थालिन् । आज तिनले दुलहासित साटो फेर्ने मौका पाइन् । घोडाको प्रति तिनको माया झन् बढ्यो, यसो गर्दन टेढो पारेर उनले धूलो चाटिरहेका दुलहालाई महान् घृणाका नजरले हेरेर घोडालाई यसो एडी लाइन् । घोडा फूलको भारी लिएझैं नाच्दै हिंड्यो ।

जब तिनी फर्केर आइन्, कर्नेल उभिरहेका थिए । तिनका कोटमा एक दुई ठाउँमा अझ धूलो लागेको थियो । कपाल खजमजिएको थियो । खसेको टोपी धूलैमा थियो । कर्नेलको नजीकै घोडा उभ्याएर कर्नेल्नी बुर्लुक्क ओर्लिन् । तिनले आफ्नो

कृतज्ञताको परिचय दिन घोडालाई धाप दिइन् । घोडा बडो तीखो स्वरले हिनहिनायो । कर्नेल्नीलाई यस्तो महान् सुखको कहिले पनि अनुभव भएको थिएन । त्यै बखतमा ढ्वाँग ढ्वाँग पिस्तोलका दुई शब्द भए । घोडा एकछिन लरबरियो र भूईंमा पछारियो । कर्नेलको हातमा पिस्तोल थियो र त्यसको प्वालबाट अझै धूवाँ आइरहेको थियो । घोडाको पेटबाट रगतको भल बगिरहेको थियो । कर्नेल्नीले एकचोटि घोडातिर हेरिन् फेरि एकचोटि आफ्ना दुलहातिर । हेर्दाहेर्दै तिनको अनुहार चाउरी परेर विकृत भयो, दुवै हातले मुख छोपेर तिनी पनि भूईंमा पछारिइन् ।



# पवित्रा

तिनको नाउँ थियो पवित्रा । आँखा तानिएका, घाँटी गाँडले विकृत भएको, देब्रे गोडा दाहिनेभन्दा सानो भएकोले हिँड्दा खोच्याएर हिंड्नुपर्ने, ईश्वरको यो राम्रो सृष्टिमा पवित्रा यस्ती एउटी प्राणी थिइन् । तिनलाई बाहुनी भनीकन भात पकाउने ठाउँ पस्न दिनु हिन्दू धर्मको खिसी गर्नुजस्तो थियो, तर तिनी केशवदेवकी भाञ्छे बाहुनी थिइन् । र पालैसँग तिनकी सुसारे, भाँडा माझ्ने, कुचो लाउने नोकर्नी र भाञ्छे बाहुनी हुन्थिन् । केशवदेवले तिनलाई बुइँगलमा एउटा कोठा दिएका थिए । एक दुईचोटि त्यो कोठामा चियाउने मौका पर्दा एउटा गुन्द्री, त्यसमा बिछ्याउने र ओढ्ने दुवै काम चल्ने एउटा ठूलो पाखी र ननिसास्सिऊन् भन्ने उद्देश्यले भित्तामा प्वाल पारी बनाएको हावा जाने दुलोमा एउटा केशवदेवको थोत्रो काईयो र एउटा मालीमा तेल भएको तिनले देखेका हुन् ।

तिनी एक्लै थिए र कसरी पवित्रा तिनको गृहस्थीको अङ्ग हुन आइन्, उनीले आफैं बिर्सिसके तर अब तिनको सट्टा अर्की सुग्घर बाहुनी राखूँ भन्ने विचार हुँदा पवित्रामाथि करुणा लाग्थ्यो र केशवदेवले तिनलाई निकाल्न सक्तैनथे ।

केशवदेव जागिरे थिए, दिनभरि अड्डामा हुन्थे । बाहुनी तिनको सारा काम गर्थिन् । बिहान झिसमिसमा उठी सडकको धारोमा

नुहाई केशवदेवलाई नुहाउन पानी भरेर कौसीमा राख्थिन्, फेरि पूजाकोठाको सामग्री ठिक्क पार्थिन्, अनि कोठामा कुचो लाएर भात पकाउने तर्खरमा लाग्थिन् । खाटबाट उभिंदा कोठा मचक्क थर्कन्थ्यो कि केशवदेव उठेको उनलाई थाहा भैहाल्थ्यो । केशवदेव बडो नियमित रूपसँग सधैं एउटै समयमा उठ्थे र पवित्रालाई तिनको उठ्ने समय थाहा थियो । पवित्रा हतपताएर दिसा जाने लोटामा पानी राखिदिन्थिन् र कौसीमा आएर साबुन, माटो, धोती, रुमाल राखिदिन्थिन् । हात धुवाउँदा सोद्धथिन्– "राती निद्रा राम्ररी पऱ्यो बाबू ? राती किन त्यतिबेर पढिरहेको, दिनभरि काम गऱ्यो र राती पनि धेरै जाग्राम बस्यो भने त आँत टुट्छ" चिन्तित भएर तिनी भन्दै जान्थिन् । केशवदेव उत्तर दिन्थे "राती गर्मी थियो, निन्द्रा चाँडै परेन ।"

"गर्मी त के भन्नु, नेपालमा हिजोको जस्तो गर्मी भएको कहिले थाहा थिएन" पवित्राले भनिन् र करुवाको टुटीबाट पानी खसाल्दै विचार गर्न थालिन्– राती उनको कोठाका झ्यालहरू खुला राख्न बिर्सिन्, गर्मी पनि कति परेको, बिस्तार बिस्तार नेपाल त मधेसजस्तो हुन थाल्यो । भन्छन् कलिमा सारा दुनियाँमा गर्मी बढ्छ रे ।

भात खाने बेलामा केशवदेवले भने "दालमा नून पुगेको छैन ।"

पवित्राले घाँटीबाट ऊँटले कराएको जस्तो ध्वनि निकालिन् र जिब्रो काटिन् । तिनको आँखा सिलौटामा पिंधेको नूनमा पऱ्यो । कामको अलमलले नून हाल्न बिर्सिछन् । हतपताएर सिलौटामा नून ल्याएर केशवदेवको थालको कुनामा हालिदिइन् । "आज बाबुले खाने सक्नु भएन । म पनि कस्तो हुस्सू, सबै काम यसै गरेर बिगार्छु ।"

जब केशवदेव अड्डा जान भनेर लुगा लाउन थालेका थिए, पवित्राले एक कचौरा ढकनी बनाएर ल्याइन् । "बाबुले जिउनार भएन, भोकै कसरी अड्डा जाने भनेर यति पकाएर ल्याएकी" कचौरालाई लुगा लाइरहेका केशवदेवको गोडानेर राखेर आफू ढोकाको कुनामा उभिएर पवित्राले भनिन् ।

बाबु अड्डा जानेबित्तिकै तिनी तलको ढोका लाएर कौसीमा भाँडा माभ्न थाल्छिन् । रछ्यानका भातका सिता टिप्न भनेर कौवाहरू भुम्मिन्थे । कौवा जब तिनको हातैबाट सिता टिपुँलाजस्तो गर्थे, तब मात्र तिनी कौवाहरू धपाउन तत्पर हुन्थिन् । जति चोटि धपायो उति चोटि त कौवाहरू टाढाटाढा जान्थे, तर फेरि पछि नजीकै आई सिता टिप्न थाल्थे । अनि पवित्राको क्रोधको सीमा रहँदैनथ्यो । धपाउन छोडेर गाली गर्न थाल्छिन् "मोरा कीरा परेका ........!" छिमेकको घरको कौसीमा एउटी नेवारकी स्वास्नी पनि भाँडा माभिरहेकी हुन्थी । त्यो भन्न थाल्थी "हेर, कस्तो नकच्चरो कौवा रहेछ । एकलै भएकी पवित्रा बज्यैलाई दुःख दिंदोरहेछ । बाजे पनि हुनुहुन्न ।" पवित्रा त्यो सहानुभूतिको शब्द सुनेर भन्न थाल्छिन् "बाबू त अड्डा जानुभएको छ । दिनभरि अड्डामा काम गर्दागर्दा थाकेर पाल्नुहुन्छ । राती गर्मीले निद्रा पर्दैन । अड्डाको सारा काम उहाँले नै गर्नुपर्छ, अरू सब कारिन्दा बगमफुसे छन् । उहाँ नभए त कामै थामिन्छ । नेपाल राज्यभरिको सबभन्दा गाह्रो काम गर्नुपर्छ । भन्सार अड्डाले नेपालबाट जाने, नेपालभित्र पस्ने मालको हिसाब राख्नुपर्छ, कहीं बिराउनु भयो भने आफ्नो टाउकोमा.........। आहारा फेरि कति थोरै छ नि ? अलिकति केही चूक भयो भने भातै रुच्दैन । हाम्रो बाबूले धेरै पढ्नुभएको छ, सब पास सिध्याउनुभएको छ, अङ्ग्रेजी पढ्न साह्रै गाह्रारो हुन्छ, भित्र शरीर तोडिदिन्छ ।"

बेलुकाको भात पकाउन चाहिने पानी लिन धारामा जाँदा छिमेकका अरू नोकर्नी चाकर्नीहरू पानी भरिरहेका थिए । पवित्राले पर्खनुपऱ्यो । नजीकैको ठूलो ढुङ्गोमाथि बसेर भन्न थालिन् "अचेल नेपालमा मधेशकै जस्तो गर्मी पर्न थालिरहेछ । रातभरि उकुसमुकुस हुन्छ........।"

पानीको गाग्री कम्मरमा राखेर सिंढी उक्लने आँटेकी थिइन्, दुई तीनवटा मानिसले "केशवजी हुनुहुन्छ ?" भनेर सोधे । यिनीहरू एउटै अड्डामा काम गर्ने मानिसजस्ता थिए । पवित्राले भयाँकले हेरेर उत्तर दिइन्– "हुनुहुन्न हुनुहुन्न ।" भुतभुताउँदै माथि उक्लिन्– "यी

कहाँका नाठाहरू आएर बाबूको समय नष्ट गर्छन् ।" केशवदेव माथि नै थिए, अड्डाबाट आएर तमाखु खाइरहेका थिए । पवित्रालाई कोही आएको मन पर्दैनथ्यो । गाग्रोलाई भान्सामा राखेर केशवदेव भएनेर गएर भनिन् "अहिले दुई-तीन मानिस आएका थिए । मैले हुनुहुन्न भनेर पठाइदिएँ । एक छिन पनि बाबूलाई फुर्सत दिदैनन् ।" केशवदेव एक छिन नबोली बसे, फेरि बिस्तारै भने "आएका मानिसहरूलाई त्यसरी फर्काउनु हुन्न । यो बानी बडो नजाती हो ।"

पवित्रा आफूलाई धिक्कार्दै फर्किन् । घरमा आएका अतिथिलाई फर्काउनु हुँदैन । यो त साह्रै नराम्रो बानी हो, अलच्छिन लाग्छ । भोलिदेखि कसैले तल ढोका ढ्याकढ्याक गऱ्यो भने निर्धा गोडाले सकेसम्म दगुरेर स्वाँ स्वाँ फ्वाँ फ्वाँ गर्दै तल ओर्लेर भन्थिन् "बाबू त अहिले घरमा हुनुहुन्न । माथि पाल्नुहोस् न, एक छिन बस्नुहोस् । अब बाबूको अड्डाबाट आउने बेला भो ।"

जब तिनले सुनिन्, बाबुले एउटी केटीको तस्वीर हेरेर उनीसँग बिहा गर्ने निश्चय गरे, उनलाई भयानक दुःख भयो । दिनभरि कसैसँग नबोली आफ्नो काम गरिरहिन् । राती सारा शरीरमा दर्द भयो, ज्वरांश पनि थियो । तर भोलि बिहान सधैंको जस्तो झिसमिसेमा उठेर धारोमा पानी भर्न पुगिन् । भन्न थालिन् "अब हाम्रो बाबूको चाँडै बिहा हुन्छ । धेरै तस्वीरमा छानिएकी केटी छन् । ठीक गुलाफजस्तो अनुहार छ ।"

भाँडा मस्काइरहेको बेलामा छिमेकको कौसीमा भाँडा माझ्न लागेकी नेवार्नीलाई सम्बोधन गरेर पवित्राले भनिन् "सुन्यौ, हाम्रो बाबुको बिहा हुन्छ । केटी आँखामा राखूँजस्ती छन् ।

नेवार्नीले जिस्क्याएर भनिन् "ए, अब तिम्री सौता आउने भइन् ?" पवित्राको कण्ठबाट अत्याहटको एउटा ध्वनि मात्र निस्क्यो । फेरि ह्या ह्या गरेर हाँसेर भनिन् "धत् !" र धेरै बेरसम्म अनौठा ढङ्गसँग हाँसी मात्र रहिन् ह्या.....ह्या......।

मालिक जब घरमा आए, पवित्राले बिस्तारै भनिन् "यतिका वर्ष भो, मैले तलब पाएकी छैन ।"

केशवदेवले भने "सारा तलव मैले ब्याङ्कमा राखिदिएको छु, तिमीलाई चाहियो र अहिले ? किन ?"

पवित्राले अर्कोतिर मुख फर्काएर उत्तर दिइन् "हामी खर्च गर्छौं ।" हामीको, हा सोझै कण्ठबाट आएको थियो । मुख अर्कोतिर फर्काएकी हुनाले केशवदेवले केवल गलगण्ड मात्र देख्न पाउँथे ।

भोलिपल्ट पोल्टोमा आफ्नो जीवनको सारा कमाइ लिएर पहिले बाँडाकहाँ गइन् "दाइ, मलाई सुनका चारवटा चुरा बनाइदेऊ । अचेलका मानिसले लाउनेजस्तो हुनुपर्छ । खूब राम्रो बनाउनू है ।"

यति भनेर पोल्टोबाट रुपियाँ खन्याइन् । बाँकी रहेको रुपियाँ लिएर लुगाको पसलमा पुगिन् "मलाई एउटा राम्रो फरिया देऊ सिलिकको र एउटा राम्रो चोलो ढाकाको । तिम्रो पसलको सबभन्दा राम्रो लुगा दिनू ।" पोल्टोमा बाँकी रहेका सारा रुपियाँ पसलेको अगाडि खन्याईदिइन् ।

बिहाको दिन तिनको फुर्ती हेर्नलायकको थियो । यताउति गरिरहन्थिन्, एक छिन स्थिर बस्न सक्तिनथिइन् । कोठालाई लिपिन्, पोतिन्, राती छिमेकका नोकर्नीहरूलाई बोलाइन्, भोज खुवाइन् र रत्यौली खेल्न थालिन् । एउटी मयलपोश सुरुवाल लाएर दुलहा बनी, जुँघा नभएको ओंठ मुसार्दै भन्न थाली "म दुलहा हुँ, मसँग को बिहा गर्छ ?"

त्यहाँ बसेका नोकर्नीहरूलाई यो बडो हँस्यौली थियो । सबै हाँसे । पवित्राको ह्या ह्या पछिसम्म सुनिन्थ्यो । पवित्रा जुरुक्क उठेर आफ्नो कोठाभित्र पसिन् र ढाकाको चोलो र रेशमी फरिया लाएर आइन् र भनिन् "म तिमीसँग बिहा गर्छु ।" फेरि सबै कोलाहल मच्चाउँदै हाँस्न थाले । दुलहा हुने मायाँको भाव देखाउँदै दुलही भएकी पवित्रालाई आलिङ्गन गर्न अगाडि बढी । पवित्रा लाज मान्ने भाव देखाउँदा देखाउँदै दुलहा बन्नेको गोडामा परेर गोडामा रुन पो थालिन् । सबै जना छक्क परे । पवित्रा हुँक्क हुँक्क गरेर खूब रोइन् । एक

छिनपछि विस्तार विस्तार उठेर आफ्नो कोठाभित्र पसिन् । र भित्रबाट ढोका लाइन् ।

भोलिपल्ट दुलही ल्याउने दिन पवित्रा सधैंकी जस्ती प्रसन्न थिइन् । आफ्नो सबभन्दा राम्रो लुगा लाएर, कपाल कोरेर, ढोकामा दुइटा गाग्रोमा पानी राखेर दुलहा र दुलहीलाई स्वागत गर्न ढोकामा आइन् र उभिइन् । केशव पहिले तामदानबाट ओर्ले पछि उनकी पत्नी ओर्लिन् । दुलहा अघिअघि, दुलही पछिपछि आफ्नो घरभित्र पसे । पवित्रा ढोकाको एउटा कुनामा उभिएर ह्याँ ह्याँ हाँसिरहिन् ।

कोठामा केशवदेव उभिरहेका थिए, उनैनेर लाजले एउटा पोको जस्तो भएर विहाको लुगा लाएकी तिनकी पत्नी थिइन् । पवित्राले विस्तारै कोठाभित्र पसेर केशवदेवलाई सम्बोधन गरेर भनिन् "यो उहाँलाई मैले टक्र्याएको ।"

यति भनेर पवित्रा खोच्याउँदै कोठाबाट निस्किन् । दुलहीले निहुरेर पवित्राले छोडेर गएको चुरालाई हेरिरहिन् । केशवदेव चुरालाई उठाएर औंलामा नचाउन थाले र घोरिए ।

विहाको रमझम सिद्धिएपछि पत्नीले गृहस्थीमा आफ्नो स्थान लिइन् । भान्सामा तिनी आफैं बस्न थालिन्, पवित्राले बाहुनीको काम गर्नु परेन, कोठामा कुचो लाउनु, पानी भर्नु र भाँडा माझ्ने काम मात्र बाँकी रह्यो । तर उनी भान्सामा आएर दुलहीले पकाएको हेर्थिन् र भन्थिन् "बाबूलाई त्यसरी पकाएको मन पर्दैन, मसला, तेल धेरै हाल्नु हुँदैन । रामतोरियामा पानी हालेको उहाँलाई घीन लाग्छ । त्यसलाई भुट्नु पो त पर्छ । तिहुनमा नून धेरै नहाल्नुहोस्, बरु बिलिनै असल मान्नुहुन्छ...... दूध एक भल्को मात्र उम्लेको चिनी थोरै परेको ।"

नयाँ दुलहीले काम बिगार्दा फरियाको फुर्को मुखमा बुजो हालेर उता फर्केर हाँस्थिन् ।

दिउँसो भाँडा माझ्दा छिमेककी नवानीलाई भन्थिन् "बूढी हुन थालिछु । चाँडै थाक्छु, पानी ओसार्दा स्वाँ स्वाँ हुन्छ । राती जीउ कट्कटी खान्छ । अब कक्रक्क परेर गुँडुलिएर बस्नुपर्ने भएछ ।"

# होड

दुलहा-दुलही राती आफ्नो कोठामा थिए । भर्खरै बिहा भएका तिनीहरू प्रेममा उकुस-मुकुस थिए । दुलहा त जैले पनि दुलहीलाई सलक्क निलिहालूंजस्तै गर्थे । दुलहीचाहिं दुलहाको त्यस्तो पुरुषार्थमा दाँजा लाग्न नसके पनि दुलहालाई जैले पनि आँखैमा राखूंजस्तो गर्थिन् । भन्ने तात्पर्य के हो भने दुवैमा अगाध प्रेम थियो ।

पद्मालाई जिस्क्याएर कुतकुत्याएको हुँदा सास्ती पाउने डरले पद्म बिछ्यौनाबाट कुदेर कोठाको कुनामा लुकन पुग्न पनि पाएका थिएनन्, दुलहीले प्रहार गरेको तकियाको गोला तिनको टाउकोमा आएर खस्यो । त्यस्तो प्रहार माया गर्ने दुलहीले मात्र गर्न सक्छिन्, त्यस्तो हलुको रुवाजस्तो । त्यसरी जिस्किंदा जिस्किंदै तिनीहरू बडा गम्भीर विषयमा वादविवाद पनि गर्न थाल्थे । मुख फुलाएर पिठिउँ पिठिउँ टाँसेर सुत्न बेर लाउँदैनथे । कुन प्रसङ्गबाट यो कुरा उठ्यो कुन्नि, तर बहस हुन लाग्यो बडो वेगले । पद्मले हाँसेर वेगलाई अचानक थामेर भने "सब स्वास्नीमानिस त्यस्तै हुन्, शक्तिहीन, हृदयको अस्थायी उमङ्गमा बगीबगी हिंड्ने । के तिमीलाई त्यसको प्रत्यक्ष प्रमाण दिऊँ ?"

पद्मा भन्दै गइन् "एक-दुई जनालाई देखेर सारा जातिमाथि आक्षेप गर्न पाईंदैन । चरित्रको विषयमा तिनीहरू बडा बलिया हुन्छन्, एक-दुई पथभ्रष्टको कुरा बेग्लै हो ।"

पद्मले बडो शान्त भएर भने "तिमीलाई मैले आक्षेप गरेको हो र ? फेरि, स्वस्नीमानिस त्यस्ता भए भनेर तिनीहरूको अवहेलना मैले गरेकै होइन । म त तिनीहरूको यो स्त्रियोचित्र गुण भनिठान्छु । तिनीहरूको समाजमा स्थान नै किन छ ? तिनीहरूको जिम्मेवारी के छ ? लोग्नेमानिसको सुखको प्राप्तिमा सहायक हुनु । तिनीहरूको कर्तव्य हो निर्धो हुनु, चरित्रहीन हुनु, अरू शब्द नपाएर चरित्रहीन भनेको, नत्र चरित्रहीन भन्न त हुँदैन ।"

पद्माको क्रोधको सीमा रहेन । उनले चिच्याएर भनिन् "प्रमाण दिनुपर्छ, त्यसै मनमा जे आयो भन्न पाईंदैन । प्रमाण देऊ ।"

दुलहाले भने "त्यै त म अघिदेखि भनिरहेको छु नि । प्रमाण दिन त म तैयार छु ।"

वादविवाद यहाँ आएर टुङ्गियो । दुलहाले प्रमाण दिने, अनि मात्र दुलहीले मान्ने, नत्र प्रमाण नदिएको खण्डमा दुलहाले दुलहीसँग स्वास्नीमानिसहरूका विषयमा प्रकट गरेको विचारका निमित्त गोडामा परेर माफी माग्ने । लौ, दुवैले यो मिलापत्र रुचाए ।

दुलहीले भनिन् "लौ, जनकमञ्जरीलाई ।"

दुलहाले– "हुन्छ ।"

दुलहाको शान्त र विश्वासपूर्ण उत्तर सुनेर दुलही अलिक आत्तिइन् । जनकमञ्जरी कुन्नि कस्ती छन् ? छिट्टै लहसिन् भने ? उनले भनिन् "जनकमञ्जरी होइन चनमतीलाई ।" दुलहाले उस्तै निश्चल भावले भने "हुन्छ ।"

पद्मालाई चनमतीमाथि पनि विश्वास भएन । उनले भनिन् फेरि "नाईं, चनमती अलिक नक्कले छ । उसमा मेरो भरोसा छैन, हरिमायालाई सके पो ।"

त्यसमा पनि दुलहीलाई विश्वास भएन र उनले भनिन् "नाईं, यत्रो ठूलो बाजीमा म लरतरो खेल खेल्दिनँ । हरिमाया कस्ती छ कस्ती ?"

पद्मले भने "तिमी त बिस्तारै-बिस्तारै मेरै विचारमा आउन थाल्यौ । तिम्रा त्यतिका साथीहरूमध्ये एउटीमाथि पनि तिम्रो भरोसा छैन भने मैले स्वास्नीमानिस चरित्रका विषयमा बडा निर्धा हुन्छन् भनेर के बिराएँ ?"

पद्मा आफ्ना चिन्हाजानी स्वास्नीमानिसलाई सम्झन थालिन् । उनले झट्ट एउटी विधवीलाई सम्झिन्, हरिकृष्णकी विधवी पत्नीलाई । तिनले आफूले खोजेकी स्त्री पाउनासाथ टप्प हत्केलाले दुलहाको मुख थुनेर भनिन् "चूप लाग, लौ त हरिकृष्णकी विधवीलाई भ्रष्ट पार त बुझूँ ।"

त्यसमा पनि दुलहाले नाईंनास्ति केही गरेनन् । विधवीलाई चरित्रहीन प्रमाण गर्न सके दुलहाले जित्ने, दुलहीलाई दुलहाको विचार मान्न कर लाग्ने, नत्र दुलहीले जित्ने र दुलहाले आफ्नो विचार मात्र छोड्ने होइन, दुलहीको पाउ परेर माफीसम्म माग्ने ।

दुलहीले एउटा शर्त थपिन् "तर १५ दिनमै प्रमाण दिनु पर्छ, बुझ्यौ ?"

अधीर भएर दुलहाले भने "लौ, पन्ध्र दिनमा नै । तर तिमी नरिसाए नि, र मलाई धोका दिने नभने । म अलिक स्वच्छन्द आचरण गर्छु यही १५ दिनका लागि । ममा शङ्का गर्न पाउँदिनौ नि ।"

पद्माले भनिन् "हुन्छ ।"

भोलि विहान उठ्ता तिनीहरूका माझमा सानो पर्दा परेजस्तो थियो । दुलही नबोली उठीकन शरीरबाट यताउति सरेको लुगा मिलाउन थालिन् । दुलहा पनि टाँगेको ऐनाको अघि उभिएर आङ तान्न थाले । दुलहीले उनीतिर हेरेर भनिन् "कत्ति न राम्रो छु भनेर उठ्नासाथ ऐना हेरेको होइन ?"

पद्मले नक्कले भएर सोधे "के म राम्रो छैन र ? तिमीलाई म मन पर्दिनँ र ?"

दुलहीले खुर्र तिनीनेर गएर टाँसिएर भनिन् "मलाई त तिमी सबभन्दा राम्रो लाग्छौ ।"

फेरि दुवैजना मिलेर खुब हाँसे ।

बेलुका फेरि सुत्ने बेलामा दुलहीले भनिन्, "एक दिन बित्यो नि। अब १४ दिन मात्रै बाँकी छ।"

दुलहाले भने "थाहा छ।"

भोलि बिहान उठ्ता फेरि तिनीहरूको व्यवहार अप्ठ्यारोजस्तो भयो। दुलही उठेर सोझै नुहाउन गइन्। दुलहा एकछिन आलेटाले गरेर मुख-हात धोएर लुगा फेरेर बाहिर निस्के। फर्केर आएपछि दुलहीले छेडेर सोधिन् "आज कहाँ नि, एकाबिहानै ?"

दुलहाले भने "हरिकृष्णका घरमा गएको थिएँ।"

दुलहीले अचानक रुँलारुँलाजस्तो गरिन्, तर बडो बलपूर्वक आफ्नो आकृतिलाई बिग्रन नदिएर भनिन् "ओहो त्यसैले त त्यसरी गुण्ड्याइँ पारेर गएका रहेछौ– फेरि एकाबिहानै।"

"के गरूँ १४ दिनमा पनि १ दिन खोट्टियो। बाजी लाइहालें।" दुलहीले केही भनिनन् र भान्सातिर लागिन्।

राती कोठामा तिनीहरूको केही कुरा भएन। चुप्प लागेर दुवै सुते।

तिनैताक पद्मा एक दिन हरिकृष्णकी विधवा पत्नीकहाँ गइन्। तिनलाई देख्नेबित्तिकै विधवीले स्वागत गरेर भनिन् "ओहो, आज कहाँबाट बाटो बिराएको ? पटक्क माया मार्‍या हो कि ? दैव र सँगिनीहरू एकैचोटि विमुख भए।"

तिनको उज्यालो मुख देखेर पद्मालाई ईर्ष्याले छोयो। झट्ट मनले तर्कना पनि गर्‍यो "यस्ती उज्याली त यो कहिले पनि थिइन झन् विधवी भएपछि त श्री नै हराएको थियो। यो आज बल्दो तेज कहाँबाट ?" यो विधवाका पहिरनभित्रबाट उसै सुन्दरता र तेज बर्सलाजस्तो थियो। उनी टोल्हाएर उभिरहिन्। विधवाले तिनको हात समातेर भित्र लगेर भनिन् "किन यस्तो अनौठोसग मलाई हेरिरहिछौ ? ममा अब के बाँकी छ र ? बाँकी भए पनि आफ्ना त मरिहाले।"

पद्माको मनले फेरि तर्कना गर्‍यो "यस्ती चञ्चले त यो कहिले पनि थिइन, बडी सोझी होलीजस्ती थिई।"

उनी घर फर्केर आइन् । खाने वेलामा दुलहालाई घोच्ने उद्योगले भनिन् "त्यो विधवा त खूब राम्री छ हो कि ? बत्ती बालेजस्ती छ होइन ?"

पद्मले खाँदै भने "अँ, निकै राम्री छ।"

पद्मा भुतुक्क भइन् । त्यसपछि तिनीहरूको वार्तालाप भएन ।

राती सुत्ने कोठामा पद्मा एक्कासि रिसाइन् "होइन, तकिया तिमी मात्रै सोहोरेर राख्ने कि मलाई पनि अलिकति टाउको अड्याउन दिने ? कि अर्को बिछौना ला भनेको हो ?"

दुलहाले छक्क परेर भने "किन रिसाएकी ? यतिको ठाउँ छँदैछ नि । छेउमा किन सुतेकी ? अल्लि यता सरे तकिया पुगिहाल्छ।"

पद्माले भनिन् "मलाई टाँसिएर सुत्न मन लाग्दैन ।

"त्यसो भए तिमी नै तकिया हाल । मलाई चाहिँदैन" दुलहाले भने ।

दुलहीले पनि उता मुण्टो फर्काएर देब्रे हातको सिरान हालेर भनिन् "चाहिँदैन मलाई तकिया ।"

तकिया न दुलहाले हाले न दुलहीले । यिनीहरू दुवैको माझमा त्यसै चिसो भएर त्यो तेर्सिरह्यो ।

दिनहुँ पद्म विधवीकहाँ जान्थे, पद्मा पनि एक दुई दिन बिराएर त्यहाँ पुग्थिन् । एकदिन विधवीले भनिन् "पद्मा, तिमी आउँछ्यौ, मलाई कति खुशी लाग्छ । म कति एक्ली छु । कति शून्य मलाई लाग्दो हो तिमी कल्पना नै गर्न सक्तिनौ । तिमी आइदिंदा म एक छिनका निमित्त सुखी हुन्छु ।"

पद्माले भनिन् "दिदी फुर्सत भएपछि म त तुरुन्त आइहाल्छु नि । उहाँ नै मलाई एकछिन पनि छाड्नु हुन्न ।"

पद्माले त्यति भनेर आँखा निहुराइन् ।

"मायाले हो कि ?" विधवीले सोधिन् ।

पद्माले सिर हल्लाएर "हो" भनिन् ।

पद्माले कुममा हात राखेर विधवीले भनिन् "लोग्नेमानिसको के ठेगान ? दुलहीलाई पनि माया गर्दै जान्छन्, अर्कालाई

पनि ताक्छन् । तिनीहरू त वडा नजाती पो हुन्छन् । तर तिम्रा दुलहा त सुशील, सज्जन छन् । त्यस्ता होइन होलान् ।"

पद्माको चिउँडोलाई उठाएर उनले फेरि भनिन् "तिमी कति भाग्यमानी ।"

पद्माले झट्ट मौका पाएर भनिन् "दिदी, तपाईंले उहाँलाई चिन्नु भएको छैन । टाढाबाट देख्ता मात्र सुकिलो हुनुहुन्छ । यसो छाला कोट्ट्याएर हेऱ्यो भने सबै पुरुष एकनास हुन्छन्, पशु-व्यभिचारी ।"

विधवीले पद्माको मुख थुन्दै भनिन् "छीः छीः पद्मा, के भनेकी ? आफ्नो पतिलाई त्यस्तो कुरा भन्नु हुन्छ ? तिम्रा पति त असल छन्, रत्न छन् ।"

पद्मालाई रन्न रीस उठ्यो । मनमनमा भनिन् "किन असल नहुनु । दुलही हुन आँटेकी छौ, पतीता भ्रष्ट ।"

त्यसपछि तिनले विधवीकहाँ जान छाडिन् । घरमा त्यसै फुलेर बसिरहन्थिन् । दुलहा र दुलहीमा कुराकानी हुन छाड्यो । पद्मा अकारण रिसाउन थालिन् । नोकरहरूको त सातो लिन्थिन् ।

१४ दिन भएपछि तिनको दशा दयनीय भयो । सारा देह आगो लागेको जस्तो भएर उनी छटपटाउन थालिन् । कोठाकोठा चहार्न थालिन्, कहिले भान्सा, कहिले भण्डार, कहिले सुत्ने कोठा, कहिले बैठक । तर तिनले कहीं शान्ति पाइनन् । तिनी दगुर्दै फेरि धेरै दिनमा विधवीकहाँ गइन् । विधवीले तिनी आएको उति रुचाएको जस्तो गरिनन् । कुरा पनि धेरै भएन ।

पद्मा हतोत्साह भएर घर फर्किन् । तिनले एक्कासि भयानक शून्य अनुभव गरिन् । सारा देहमा चिसो पऱ्यो । तिनी उभिन नसकेर ओछ्यानमा पछारिइन् र भक्कानो छोडेर रुन लागिन् । रुँदारुँदा तिनलाई अलिक शान्ति भयो । तिनी शिथिल भएर निदाइन् ।

पद्म आए । तिनले पद्मालाई हल्लाएर उठाए "के कुटाइममा सुतेकी पद्मा ?"

पद्मा आँखा मिच्दै उठिन् । निर्धो भएको जस्तो त पद्मालाई लाग्यो तर चित्त शान्त थियो । उनमा जोश पनि थिएन, उमङ्ग पनि थिएन । एकदम शिथिल भएकी थिइन् ।

राती दुलहाले कोट्ट्याएर पद्मालाई भने "पदमा, आज चौधौं दिन हो ।"

पद्माले बिस्तारै भनिन् "थाहा छ ।" र उता फर्केर सुतेको जस्तो गरिन् । तर तिनका दुलहाले तिनको आड हल्लेको थाहा पाएर उनलाई आफूपट्टि फर्काउने प्रयत्न गरेर भने "किन पद्मा, रोएकी ? के भयो हँ ?"

त्यति भन्नु के थियो पद्मा झन् तकियामा मुण्टो गाडेर घुँक्कघुँक्क रुन थालिन् ।

पद्म महान् आश्चर्यमा परे । उनले सोधे "भन न प्राण के भयो । तिमी अचेल मसँग त्यसै रिसाउँछ्यौ, तिम्रो व्यवहार पनि अनौठो भएको छ । म त अन्योलमा परेको छु ।"

पद्माले रुँदैरुँदै भनिन् "तिमीलाई मेरो माया भए पो । म ता तिम्रो को हुँ र ।"

पद्मले उनको पिठ्यूँ सुमसुम्याउँदै भने, "पद्मा, तिमी किन यस्तो अमङ्गल वाक्य मुखमा ल्याउँछ्यौ ? तिमी त मेरो जीवनको प्रकाश, मेरो आशा, मेरो भरोसा हौ ।"

पद्माले सुँक्क गरेर नाके बोलीमा भनिन् "त्यसो भए किन त्यो विधवासँग यसरी लहसिएको छ ? किन त्यसलाई त्यस्तो माया गर्न थालेको त ?"

पद्मले हाँसेर भने "कस्ती लुच्ची, आफै भन्ने, आफै १५ दिनको म्याद दिने र आफै म- देखि रिसाउने । मैले पहिले नै भनेको थिएँ नि ममाथि शङ्का नगरे ।"

पर्दैन त्यो विधवासित सम्बन्ध बढाउन ।"

"तर मेरो बाजी नि ? जित्न आँटिसकेको छु ।"

लौ, मैले हारें । बाजी तिमीले नै जित्यौ, मैले हारें, मलाई प्रमाण चाहिंदैन ।"

पद्मले भने "त्यसो भए तिमी पनि स्त्रीजातिका सम्बन्धमा मैले जस्तो विचार प्रकट गरें, त्यसलाई समर्थन गर्छ्यौ ?"

"गर्छु बाबा, गर्छु ।" पद्माले अधीर भएर भनिन् ।

# कथा

धेरै पुरानो कथा हो । त्यस युगको कथा हो, जब यो पृथ्वीका मानिस देवलोकका देवतासँग प्रतिद्वन्द्विता गर्थे । देवताहरू पनि दानवसँग युद्धमा पराजित हुने भयले पृथ्वीमा अवतरण गर्थे र कहिले दधीचिको हाड मागी औ कहिले दशरथसँग सहायताको प्रार्थना गरी विजयोन्मुख दानवलाई परास्त गर्न समर्थवान् हुन्थे । आजकालका ब्राह्मणहरूजस्ता ती देवताहरू पनि उच्च पदमा आफूलाई आरूढ पारिराख्न आफूभन्दा सानो जातिका मनुष्यको कुनै प्रकारको पनि सहायता लिन सङ्कोच मान्दैनथे, तर जब तिनै मनुष्य तपस्याद्वारा देवपदमा पुग्ने सुप्रयत्न गर्थे, देवताहरूको निम्ति यो असह्य हुन्थ्यो । त्यसो हुनाले देवताहरू सांसारिक मोहमायालाई त्याग गरेर घोर जङ्गलमा तपस्या गर्न गएका ऋषिहरूको तपस्या भङ्ग गर्न नाना उपाय गर्थे । तिनको सबभन्दा सफल उपाय थियो अप्सरालाई पठाई ऋषिहरूको तपस्यामा बाधा उपस्थित गराउनु । तिनैताक एउटा मनुष्य यथार्थ ज्ञान प्राप्त गर्न, जुन ज्ञानले देवपद प्राप्त गर्न सकिन्थ्यो, जङ्गल पसे । उनको विश्वास थियो समाजको प्राणी भएर ज्ञान प्राप्त गर्न सकिँदैन । आमाबाबुको स्नेहको बन्धन र प्रियाको प्रेम-बन्धन, मित्रको सौहार्द्र, समाजका कर्तव्य इत्यादि आत्मोन्नतिका बाधक हुन् । निर्जन

स्थानमा मनुष्यसमाजका सारा बन्धनलाई छिनालेर तिनी तपस्या गर्न लागे । जङ्गलका कन्दमूल र कुटीनेरको सानो नदीको स्वच्छ जलले क्षुधा र पिपासा शान्त गरेर सारा समय तिनी समाधिमा लीन हुन्थे । समाधिमा बसेका बखतमा हिंस्रक पशु आफ्नो नृशंसतालाई बिर्सेर यिनलाई घेरेर बस्थे । मृगशावकहरू ऋषिसँग आफ्नो घनिष्ठता प्रकट गर्न सिंह, बाघ, भालूका समुदायलाई ठेल्दै ऋषिसँग टाँसिन पुग्थे । तपोभूमिको शान्ति भङ्ग होला भन्ने आशङ्काले बाघहरू आफ्नो टाउको तलसम्म निहुराएर बिस्तारै हिंड्थे, मृग र खरायोहरू मात्र निर्भयले वुर्लुक्क वुर्लुक्क उफ्रन्थे । नदीको कलकल ध्वनि त्यहाँको शान्तिमा गम्भीरता थपिदिन्थ्यो । चराचुरुङ्गीको कलरवमा सङ्गीतको मधुरता हुन्थ्यो ।

नदीको दाहिने किनारमा विशाल वृक्षहरूले घेरिएको एउटा सानो स्वच्छ स्थान थियो, त्यहीं ती ऋषिको कुटी थियो । ईश्वरसँग साक्षात् गर्न यदि कुनै स्थान उपयुक्त थियो भने त्यही स्थान थियो ।

तिनको तपस्याको प्रथम कार्य थियो शरीरको आफूमाथिको शासनलाई निर्मूल पार्नु, त्यसपछि मनमाथि विजय पाउनु र अन्त्यमा आत्मालाई ईश्वरमा लीन पार्नु । शरीरमाथि विजय पाउन उनले आफूलाई नाना प्रकारका कष्ट दिए, वैशाखमा सप्ताग्नि बालेर बसे, माघमा नदीमा घाँटीसम्म पानीमा डुबेर बसे । भोजन घटाएर अनेक दिन निराहार बस्न सक्ने भए । भोक, तिर्खा, शीतोष्णको बन्धनबाट मुक्त भएर उनी समाधिमा बस्न थाले । विस्तार विस्तार गर्दागर्दै तिनी महीनौं समाधिमा लीन हुन सक्ने भए ।

एकचोटि तिनी समाधिमा आसीन भए । त्यो अवस्थामा बस्ताबस्तै महीनौं बित्यो । ऋतु परिवर्तन भयो । जङ्गलमा पात झरेर वृक्षहरू नाङ्गा भए । फेरि पालुवा पलाउन थाल्यो, जङ्गल हरियो भयो, फूल फुलेर सुकेर तपोभूमिलाई ढाके । जङ्गलमा फल लटरम्म फलेर हाँगाहरूले माटो छुन थाले । फल पाके । ऋषि समाधिस्थ छन् । भित्र तिनको आत्मा अलौकिक ज्योतिले दीप्त

हुँदै गएको थियो । जतिजति दिन बित्दै गए उति भित्रको ज्योति बढ्दै गयो, शान्ति थपिँदै गयो ।

तपोभूमिको दूबो बढेर ऋषिलाई छोप्न थाल्यो, धमिराले बिस्तारै उनको गोडातिर घर बनाउन थाले । ऋषि निश्चल भए, तपस्यामा थिए । बाहिरको प्रकृतिको परिवर्तनले तिनको भित्रको शान्ति भङ्ग गर्न सकेको थिएन ।

तिनको भित्र एउटा अद्भुत अपार्थिव ज्योति बलिरहेको थियो । तिनको सारा शरीर, मन, आत्मा सबैले कहिले अन्त्य नहुने आनन्दको अनुभव गर्न थाले । तिनी सहस्र सूर्यको ज्योतिपुञ्ज आफूमा अनुभव गर्न थाले । के तपस्या सफल त भएको होइन ? ऋषिका आँखा आफै उघ्रेर आफ्नो चारैतिरको प्रकृति परिवर्तन, आफ्नो शरीरका छातीसम्म धमिराले लाएको माटोको गुँडको ध्यानै नराखी तिनको प्रथम दृष्टि पर्‍यो स्नान गरिरहेकी एउटी रमणीमाथि ।

ऋषिको तपस्याले इन्द्रासन जब डगमगाउन थाल्यो तब इन्द्रले आफ्नो सभाकी सबभन्दा सिपालु र सबभन्दा राम्री अप्सरालाई त्यहाँ पठाए ।

रमणी आफू एकली छु भनेर निःशङ्क भएर शरीरबाट सारा वस्त्र झिकेर नुहाउनुभन्दा बढ्ता पानीसँग जिस्किरहेकी थिइन् । तिनको गोरो शरीरमा स्वास्थ्यको चिन्ह रक्तआभा उस्तै दीप्त भएको थियो जस्तै हिमालयका शिखरमा सूर्यको प्रथम किरण पर्दा हुन्छ ।

घुँडासम्म नदीमा उभिएर अँजुलीमा पानी लिन भनेर निहुरँदा वस्त्र नभएको तिनको शरीर रजनीगन्धाले निर्मित भएको जस्तो शुभ्र देखिन्थ्यो । आहार पाएपछि चञ्चुप्रहार गर्न उद्यत भएका पक्षीद्वयजस्ता अधोमुखी स्तनयुग्म महान् सुन्दरताका केन्द्र थिए । यस्तो त्यो युवतीमाथि ऊर्ध्वरेता ऋषिको दृष्टिपात भयो ।

भित्रको शान्ति र आनन्द र बाहिरको निर्जन एकान्तमा नदीको धारामा उभिएकी, नदीको प्रवाहले आफूलाई दृढ पारेर उभ्याउन नसकेर बेतजस्तो काम्न थालेकी सुन्दरी युवतीमा ऋषिले

केही भेदको अनुभव गरेनन् । समाधिको पराकाष्ठा वा ऋषिको मर्न नसकेको वासनाको प्रतिमूर्ति ती रमणी थिइन् ।

ऋषि बिस्तारै उठे । तिनी बसेको ठाउँमा घाँस उम्रेको थिएन । उनी आफू समाधिमा भएको समयमा उत्पन्न भएको शान्तिको अझै अनुभव गर्दै सोझै ती स्नान गर्न थालेकी रमणीनेर गए ।

तिनीहरूको त्यहीं स्वयम्वर भयो । ऋषि जङ्गलमा विहा गरेर घर फर्के ।

तिनले जङ्गलमा गरेको तपास्याको यश चारैतिर फिंजिसकेको थियो । त्यो देशका राजा ठूलो समारोहसँग तिनको दर्शन गर्न जाने तर्खर गर्न थाले ।

तर तिनी त जङ्गलवाट कुनै किन्नरीसँग बिहा गरेर पो फर्के । ऋषिको यत्रो ठूलो पतन देखेर सारा समाज विस्मयमा पऱ्यो । स्वागत गर्न तत्पर भएका मानिसहरूले एउटी युवतीलाई तिनको साथमा देखेर मुख फर्काए । जान्नेसुन्नेले यो ऋषिको तपस्यादेखि आत्तिएर इन्द्रले पठाएको कुनै अप्सरा हो भन्ने निश्चय गरे ।

तिनी एउटा गाउँमा घर बनाएर त्यहाँका मानिसहरूले गर्ने व्यवसाय कृषि गरेर गृहस्थी गर्न थाले । कालगतिले तिनलाई सन्तान पनि भयो । गाउँलेहरूलाई सानोतिनो आफूबाट हुने सहायता दिन तिनी र तिनकी पत्नी सदैव तत्पर हुन्थे । गाउँमा कोही बिरामी भयो, तिनकी पत्नी सेवामा पुग्थिन् । राजाका ढोकामा, श्मशानमा पहिलेका ऋषि तर अहिलेका दुई कुमारका पिता गाउँका मान्छेहरूका साथ दिन्थे । तिनको सानोतिनो दया र सहायताका पात्र त्यस गाउँका सारा प्राणी थिए । कुनै गाउँलेहरूलाई कष्ट पर्दा तिनीकहाँ खुरुं गएर आफ्नो अधिकार नै छ जस्तो गरेर उनीहरू तिनका सहायताको दावी गर्थे ।

तर तिनको ऋषित्वको पतन गाउँलेले बिर्सन सकेनन् । तिनीहरू आफ्ना घरअघि आँबो गाडी गाईको छाप्रो बनाउन भनी व्यस्त भएका ती ऋषिलाई शङ्काका दृष्टिले हेर्थे । इनारमा घैला लिएर पानी भर्न जान थालेकी तिनकी पत्नीलाई देखेर तिनीहरू विचार गर्थे–कतै कुनै किच्कन्नीले त तिनलाई आफ्नो वशमा पारेकी होइन ?

तर तिनी जङ्गलमा समाधिमा लीन हुँदाखेरि एक्कासि उत्पन्न भएको सुख र शान्तिको अझै अवाध अनुभव गरिरहेका थिए।

# पुस्तक

कोशीको बाढीले एउटा जिल्ला जम्मै बगायो । मानिसहरू कति बगे, कति भोकभोकै मरे । रोग-व्याधि फिंजियो । ती असहायका सहायताका लागि सरकारबाट मद्दत पुग्यो र अरू संस्थाहरूले पनि स्वयंसेवक पठाए । म पनि स्वयंसेवकको दल लिएर एउटा गाउँमा पुगें । साथमा कुइनेन्, क्लोरोडाइन, पोटाश पर्मेगनेट इत्यादि औषधि थिए ।

बनारसबाट हिंड्दा हामीहरूले सारा प्लान छलफल गरिसकेका थियौं । एउटा इलाकामा पुगेर त्यहाँका गाउँगाउँमा गई औषधि बाँड्ने, प्रत्येकले आफूलाई चाहिने कुरा लिएर हिंड्नुपर्थ्यो । मैले औषधि त लिएँ, फूल पनि बोकें तर दुर्भाग्यवश पुस्तक लिन बिर्सेछु ।

इलाकाका इलाका पानीमा थियो । पानीबाट माथि उठेका झारहरूमा फटेङ्ग्रा, कमिला र अरू सानासाना कीराले आश्रय लिएका थिए । एक-दुई नडुवेका अग्ला ठाउँमा लाग्नेमानिस, स्वास्नीमानिस, बालक, बालिकाहरू कमिलैसरह स्याउँस्याउँती थिए । रोग र भोकले व्याकुल ती किसानहरू उभिन नसकेर त्यसै जथाभावी लडिरहेका थिए, चितामा सुतेका जस्ता । तिनीहरूमध्ये कतिले सुत्तासुत्तै अन्तिम सास फेरिसकेका थिए तर नजीकै टाँसिएर सुतेका अरू अझै बाँचिरहेकालाई यो कुरा थाहै थिएन । एउटा वान्ता गर्दागर्दै पानीनेर मुन्टो गाडेर पछारियो । बेलाबेलामा मर्नुभन्दा पहिले निर्धक्क भएर

चिच्याएको कुकुरजस्तो क्रन्दन सुनिन्थ्यो । यो त मैले त्यो ठाउँको वर्णन गरें, जुन ठाउँ बाढीको सबभन्दा ठूलो प्रकोपमा परेको थियो । सरकारको विज्ञप्तिमा यो ठाउँमा प्रायः १०,००० मान्छे मरेको सूचना थियो ।

हामीहरूले यसैलाई आफ्नो क्षेत्र छान्यौं । यै ठाउँमा कम्मर कसेर काममा लाग्यौं । हाम्रो मुख्य काम थियो मरिसकेकाको संस्कारको प्रबन्ध गर्नु, बाँचेकाको पेटमा अन्न पार्नु र रोगीलाई औषधी र पथ्य दिनु । मरिसकेकालाई हामीले छुट्ट्यायौं । बाँचेकामध्ये पनि रोगी र निरोगीलाई छुट्ट्यायौं । नजीकैको गाउँसम्म बोकेर लैजान सक्नेलाई बोकेर पुऱ्यायौं र वहीं उसको खाने र औषधिको प्रबन्ध गऱ्यौं । अरूलाई त्यहीं बाँधमै खानेकुराहरू पुऱ्याउन थाल्यौं । धेरैलाई यसरी बचायौं भन्ने विश्वासले हामी दिनरात केही नमानेर भोकतिर्खाको वास्ता नगरेर मिहिनेत गरिरह्यौं ।

बिस्तार-बिस्तार त्यस ढिस्काबाट अन्तिम मान्छेलाई लग्यौं । बाढी पनि कम हुँदै गयो । पानीमा तीव्रता थिएन, थाकेर नजानिंदो हिंडाइले बगिरहेको थियो । पहिले गरेको उत्पातलाई बिर्सन सक्यौं भने अहिलेको पानीको दृश्य रमाइलो नै थियो, कुनै तालजस्तो । हामीहरूको काम पनि सिद्धियो, हाम्रो जाने बखत भयो । यत्रो मिचामिचपछि अहिलेको शान्तिले हामीलाई उद्विग्न पाऱ्यो । केही काम थिएन । काम नपाएर बस्ता असाध्य गाह्रारो हुँदोरहेछ । मेरा साथीहरू धेरै फर्किसकेका थिए । अरूचाहिँ अरू अरू गाउँमा छापछाप्ती थिए ।

म अहिले एकलै सानो गाउँमा थिएँ । दुई-तीन दिनमा सारा साथीहरू यहीं भेला हुन्छन्, अनि सँगसँगै फर्कने निश्चय भएको थियो । म काम नपाएर त्यसै बसिरहेको थिएँ । गाउँमा एक प्रकारको शान्ति हुन्छ, जसले हामीजस्ता शहरियाहरूको मस्तिष्कमा र हृदयमा गह्रौं भएर थिच्छ । एउटा चरो यताउति यो हाँगोदेखि ऊ हाँगो गरिरहेको थियो । यसले एकान्तको भीषणता झन् थपिदिन्थ्यो ।

म एउटा बूढो खेतालाको अतिथि थिएँ । जामुनाको बोटमुनि डोरीको खाट हालेको थियो, त्यसैमा पल्टेर म दिन

काट्ने प्रयत्न गरिरहेको थिएं । आफ्नो कृतज्ञता प्रकट गर्न त्यो बूढो उठ्यो र हाल जोडेर उभिइरहन्थ्यो ।

मैले केही गर्न सकिनँ भनेर त्यो आएर ठिङ्ग उभियो । बाढीले भएका गाई-वस्तुहरू बगाएर लग्यो । दूधदही केही छैन ।

मैले त्यसको सोझो आतिथ्यले गदगद भएर भनें– "बूढाको तिमीले मलाई आफ्नो आतिथ्यले सधैंको निम्ति ऋणी पाऱ्यौ । मलाई सबै कुरा पुगेको छ ।

त्यो वूढो किन मान्थ्यो "यो गाउँ त्यति गरीब त होइन, बाबू यो बाढीले सब कुरा बगाएर लग्यो, नत्र कसैलाई एक पेट खान र आएगएकालाई खुवाउन पुगेको थियो । मेरै दूध दिने दुईवटा गाई बगेर गए । मलाई आफूलाई के चाहिएको थियो र, बूढो भएँ, मर्ने बखत भयो ,। आएगएकालाई गर्न नसक्ता दुःख हुन्छ । ऊ छँदा सह थियो, त्यो पनि मरेर गई ।"

बूढो चुप्प लाग्यो । मैले कुहिनाले टेकेर यसो आफ्नो टाउको उठाएर त्यसलाई हेरिरहें । त्यो बूढो बिस्तारै आफ्नो छाप्रोपट्टि लाग्यो औ एक छिनपछि छाप्राका दैलामा आएर बस्यो ।

म फेरि उँधो मुण्टो लाएर जामुनाका पात गन्न थालें । अल्छी लागिरहेको थियो । हाई हाई आउँथ्यो । आज बेलुकासम्म एकदुई साथी आइपुग्छन् क्यारे । टाढासम्म जहाँ दृष्टि पुग्थ्यो एकनास पानी थियो । सूर्यको प्रकाश त्यसमा टलमल टलमल गरिरहेको थियो, असाध्य पट्टाइलाग्दो । मैले पुस्तक ल्याउन बिर्सेछु, नत्र समय सजिलैसँग काटिन्थ्यो । कहिलेकाहीं घरको सम्झना हुन्छ । त्यो बूढो एक्लै छाप्रोको दैलानेर टुक्रुक्क बसेर एकनासले एकातिर हेरिरहेको थियो । मेरो बानी जहाँ हिंड्दा पनि एकदुई पुस्तक बोक्ने छ । यसपाला बिर्सेछु । रोम्याँ रोलाँको जीनक्राइष्टोफर पढ्ने इच्छा थियो । एकदुई अध्याय पढि पनि सकेको थिएँ । आजकल त्यो पुस्तकको खूप नाम छ । पुस्तक सम्झेर म झन् छटपट गर्न थालें । अब झन् समय बिताउन गाहारो भयो । कुनै पुस्तक भए पनि यसो अक्षर हेरेर समय काट्दो हुँ । यहाँ मूर्ख देहातमा के पुस्तक पाइन्थ्यो । म कहिले उठ्थें, कहिले बस्थें र

कहिले निश्चल भएर सुत्थें । बूढाले धेरै बेरसम्म मलाई हेरिरह्यो । मेरो छटपटी थाहा पाएर त्यो फेरि मनेर आयो र उभियो ।

मैले भनें "बूढा, कसरी दिन काट्ने ?"

बूढाले भन्यो "खोइ केही काम छैन । डुल्न जाऊँ भने चारैतिर पानी नै पानी छ, नत्र यहाँ डुल्न त खूब रमाइलो ठाउँ थियो । ऊ त्यो सल्लाको रूखनेर पोखरी थियो ।"

मैले भनें "पुस्तक भए पनि बसीबसी पढिरहने थिएँ ।"

बूढाको अनुहार उज्यालो भयो "एउटा पुस्तक त मसँग छ । हरिहरले मर्ने साल कहाँबाट लिएर आएको थियो ।"

त्यो पुस्तक लिन छाप्रोभित्र पस्यो । मेरो अलिक उत्साह बढ्यो । राम्रो पुस्तकको त मैले आशा नै गरेको थिइनँ, तर कुनै साधारण कथाको पुस्तक भए पनि अक्षर त हेर्न पाइन्थ्यो । साँझसम्म कोही साथी पनि आइपुग्लान् ।

कालो ध्वाँसो लागेको पातलो पुस्तकाकारको एउटा कुरो लिएर त्यो बूढो मनेर आयो । मलाई त्यो कुरा दिँदै भन्न थाल्यो "हरिहर, मेरो छोराले मर्ने साल यो लिएर आएको थियो । त्यो बडो बाठो थियो । पुस्तक पढ्थ्यो । जैले पनि यसैलाई हेरिरहन्थ्यो । मलाई त्यसको धेरै आशा थियो । दैवले चटक्क चुँडेर लगे । मैले त्यसको मायाले यसलाई छानामा घुसारी राखेको थिएँ । आज छोराले ल्याएको काम लाग्यो ।"

बूढाले हात जोरेर भनिरह्यो । म मुण्टो गाडेर त्यसले ल्याएको पुस्तकलाई हेरिरहेको थिएँ । डाक्टर एस. के. बर्म्मन (डाबर) को १९२६ सालको सूचीपत्र थियो । दमका निमित्त श्वासारी, मलेरियाको निमित्त जूडीताप........... ।

# स्कूलमास्टर

नन्दराज कापीहरू एकातिर राखेर उठे । नुहाई, धुवाई, खाई स्कूल जाने बखत भैसक्यो । उमानात त असलै विद्यार्थी थियो, किन अचेल बिग्रेछ खोइ, आजको कापी हेर्दा त त्यसको लक्षण राम्रो देखिँदैन । यो वर्ष पास गर्नसक्ने हो-होइन । ग्रामर त भुसुक्कै पोलेर खाएछ । ग्रामरले भाषालाई शुद्ध लेख्न र बोल्न सिकाउँछ, यो वाक्य तिनको मतिष्कमा त्यसै आयो । व्याकरण नजानेर कोही पास गर्न सक्तैनन् । उनी टाउको कन्याउँदै नुहाउने कोठातिर पसे ।

नुहाउने कोठाबाट निस्केर सोभै भान्सामा पसे । छिटछिटै भात खाएर लुगा लगाएर स्कूल जान तयार भए । तिनले अलिक हतार गर्नुपऱ्यो किनभने समय थोरै थियो । साढे दश बज्न आँटिसकेको थियो । क्या हो यो, कहिले टाइममा खान पाइन्न, सुबिस्तासँग स्कूल पुग्न पाइन्न । राधाको त दोष होइन । भान्सामा पुग्नासाथ खाना तैयार थियो । आफैं धेरै बेर कापी हेरिरहें । नहेरेर के गर्नु ? पैंतिस कापी हुर्नु थियो, बिहानै सिध्याएर स्कूल लैजानु थियो ।

त्यसै बखतमा उमानाथ आयो । उसको अभिवादनलाई फर्काएर उसको काँधमा हात हालेर नन्दराजले भने “क्या हो उमा, अचेल पढ्दैनौ के ? कस्तो बिग्रेको ? ग्रामर हेर ग्रामर, नत्र जाँचमा फेल गरौला । कर्ता वहुवचन भएपछि त्यसको क्रिया पनि वहुवचन

हुनुपर्छ नि ! त्यस्तै त्यस्ता गल्ती गरिरहेछौ । मलाई ता तिमीबाट धेरै आशा थियो ।"

उमानाथ टाउको निहुराएर सुनिरह्यो । नन्दराजले एकचोटि पिठ्यूँमा धाप मारेर भने "लौ जाऊ, राम्ररी पढ्नु, नबरालिनू ।"

त्यति भनेर आफू स्कूलतिर लम्के । उमा मात्र बिग्रो भनेर कसरी भन्नु, कुनै पनि त असल छैनन् । यता दुईतीन वर्षदेखि खराब ब्याच आउँदैछ । पटक्क किताबतिर ध्यान दिँदैनन् । झन् शहरमा सिनेमा भैदिएर ता आगोमा घिउको काम गऱ्यो । चार वर्षअघिको ब्याच कस्तो राम्रो थियो, जनार्दन, केशरी, गजराज, अम्बिका । यसपालि त त्यही बङ्गाली ठिटो निस्क्यो भने मात्र ।"

स्कूल पुगेर तिनी आफ्नो क्लासमा पसे । दिन निकै गर्मी थियो । तिनी पढाउन थाले "जलालुद्दीनलाई मारेर अलाउद्दीन राजगद्दीमा बस्यो, तर त्यसको स्थिति सन्तोषजनक थिएन किनभने जलाली सर्दार जलालुद्दीनको हत्याले क्षुब्ध भएका थिए.....।"

धेरै केटाहरूको ध्यान उनले पढाएपट्टि थिएन । त्यो कुनामा बस्ने केटाहरू त हाँसेर चलिरहेका थिए । कोही हाई गरिरहेका थिए । एकदुई त यसो आँखा उघारेर राताराता आँखाले मास्टरतिर हेर्थे ।

नन्दराज निरुत्साहित नभएर पढाउँदै गए "उत्तरतिरको सारा राज्य जितेर त्यसले दक्षिणतिर आफ्नो दृष्टि दियो । त्यसले आफ्नो विश्वासपात्र सर्दार मलिक काफूरलाई दक्षिणका देशहरूमा आक्रमण गर्न पठायो । काफूरले देवगिरी......।"

केटाहरूले ध्यान नदिएको देख्दा अब उनको धैर्यको अन्त्य भयो । उनले पढाउँदा पढाउँदै टक्क थामेर सोधे "हरिहर, अलाउद्दीनले कुन सालमा गुजरातमा आक्रमण गऱ्यो ?"

हरिहर झसङ्ग भएर उठ्यो, फेरि पक्क परेर मास्टरको अनुहार हेरिरह्यो । मास्टरले रिसाएर भने "पढाएको सुन्नु छैन, न घरमा पढ्नु छ । कसरी पास गर्छौ ? पढ्न मन छैन, किन स्कूल आउँछौ, बाबुआमाको सम्पत्ति बर्बाद गर्छौ ?"

विद्यार्थीहरूमा शान्ति स्थापित भयो । बदमाशी गरेर अघि चलिरहेका सब केटाहरू निर्दोष अनुहार तुल्याएर मास्टरतिर

हेर्नलागे । मास्टर भन्न थाले । "अलाउद्दीन बडो इम्पोर्टेन्ट छ । जाँचमा आउने सम्भावना छ । राम्ररी सुन ।"

विद्यार्थीहरूका कान ठाडाठाडा भए । नन्दराज फेरि भन्न थाले "भारतवर्षमा यत्रो ठूलो साम्राज्य अशोकपछि कसैले स्थापित गरेको थिएन, तर यो साम्राज्यको जग बलियो थिएन ।"

त्यसै बखतमा घण्टी टन्न बज्यो । नन्दराज जुरुक्क उठे । विद्यार्थीहरू पनि कोही आँग तान्दै, कोही हाईहाई गर्दै उठे । एक छिन क्लास अव्यवस्थित भयो । नन्दराज अर्को क्लासभित्र पसे । यस क्लासका ठिटाहरू अलिक बाठा होलान् भनेजस्ता थिए र सोध्यो भने फट्ट फट्ट जवाफ दिन्थे । यस्तालाई पढाउन पनि मन लाग्छ । झन् माथि क्लास चढ्दै गए झन् बिग्रँदै जान्छन् । यिनैहरू पछि ठूलो क्लासमा पुगेपछि उस्तै स्वाँठ हुन्छन् । त्यसपछि नन्दराज पढाउन थाले "एउटा भेंडाको पाठो खोलोनेरै घाँस चरिरहेको थियो । त्यसै बखत एउटा ब्वाँसो आयो र निहुँ खोज्नथाल्यो– ए भेंडा, तँ किन मैले खाने पानी धमिलो पार्छस् ?"

सब ठिटाहरू आफ्नो आफ्नो पुस्तकमा मुण्टो गाडिरहेका थिए । त्यो पाठ सिध्याएर मास्टरले सोधे "यस पाठले के शिक्षा दिन्छ ?" एउटा विद्यार्थीबाट सन्तोषजनक उत्तर पाएर नन्दराजले भने "हो, दुर्जनको कहिले सङ्गत नगर्नु ।"

यो पाठ बर्सेनी नन्दराज पाँचौ क्लासलाई पढाउँछन्, वर्सेनी त्यस क्लासका ठिटा यस पाठलाई रुचाउँछन् । त्यसो हुनाले यस पाठको नूतनता नन्दराजको निम्ति कहिले पनि गएको थिएन । यो पाठसम्बन्धी जति हाँस्ने वा अर्तीका कुरा थिए बाह्र वर्षदेखि उनी एकनास भन्दै आएका छन् । पुच्छर काटेका स्यालको पाठ पढाउँदा क्लास कोलाहल गरेर हाँस्थ्यो । तिनलाई पनि हाँसो उठ्थ्यो र एक छिन तिनी पनि हाँस्थे तर पछि हाँसो थामेर भन्थे "कति हल्ला गरेर हाँसेको, सुस्तसुस्त पो हाँस्नु, हेडमास्टरको कोठा नजीकै छ, सुने भने ?"

नन्दराज आफ्नू पढाउने ढङ्गदेखि सन्तुष्ट हुन्थे र उज्यालो मुख लाएर घण्टी बज्नासाथ क्लासबाट निस्कन्थे ।

हेडमास्टरले मास्टरहरूको मीटिङ् बोलाएको थियो । केटाहरू धेरै बरालिए, कसरी तिनीहरूलाई सपार्ने, यही विषयमा छलफल गर्नु थियो । नन्दराज पनि हेडमास्टरको कोठामा पुगे, कति मास्टर अघिदेखि नै उहीं बसिरहेका थिए औ कति आउँदै थिए । सबको मुख गम्भीर थियो र सब यो विषयमा आफ्नो आफ्नो विचार राख्थे । हेडमास्टर विस्तार विस्तार भन्न थाले "हाम्रो स्कूलका धेरै केटाहरू बरालिए । पढ्न मन लाउँदैनन्, अरू थोक जेसुकै गरून्, हाम्रो सम्वन्ध तिनको पढाइसँगै छ । यता चार वर्षदेखि परीक्षाफल सन्तोषजनक छैन ।"

नन्दराजले गम्भीर मुद्राले जोरे "यसपाली त झन् परीक्षाफल नराम्रो होलाजस्तो छ । सैकडा तीस पास भए भने खूब भयो ।"

हेडमास्टरले तिनले बीचको टोकेको मन पराएनन् । यही कुरा त तिनले भन्न आँटेका थिए । प्वाक्क भन्ने वानी, एकछिनसम्म तीखो दृष्टिले नन्दराजलाई हेरेर फेरि भन्न थाले.... । नन्दराजचाहिं आफूले दिएको सूचनाले, जो गणितका दृष्टिले सही थियो, सन्तोष मानिरहेका थिए । सैकडा तीस कस्तो ठ्याक्क.... तीसभन्दा बढ्ता पास भएछन् भने मलाई भन्नू, केटाहरूको बारेमा यति स्पष्ट ज्ञान अरू कसले राख्छ ? अरूलाई त आफ्नो तलब पकाउनु छ, केटाहरूको भविष्य, उनका पढाइको विषयमा, नन्दराजलाई विश्वास थियो, तिनी जति अरू कोही ध्यान दिँदैनथे ।

नन्दराजले बडो विश्वासका साथ आफ्नो प्लान सबैका समक्ष राखे "केटाहरू यसरी बरालिएका हाम्रो स्कूलमा मात्र होइनन् । सब स्कूलमा यस्तै छ । यो अन्तर्राष्ट्रिय परिस्थितिको परिणाम हो ।"

यत्रो महानै वाक्य मुखबाट निकाल्नासाथ नन्दराज आफैंदेखि खुशी भए । मुख मिठ्याए । यत्रो मतिष्क अरू कसमा छ र ? हेडमास्टर शिक्षा विभागको नियमावलीमा के लेखेको छ त्यो हेर्न खोज्छन् । तिनी मास्टरहरूको केटामाथिको अधिकार धेरै अपहरण भएकाले केटाहरू छाडा भएका भन्छन् । नन्दराज विचार गर्दै जान्थे "कस्तो सङ्कीर्ण विचार । बी. टी. पढ्दा लडकाहरूको मनोविज्ञान पढेका होलान्, फेरि किन यस्तो सङ्कीर्ण विचार भएको ?"

नन्दराजले पेश गरेको प्लान स्वीकृत भएन । नन्दराजले त्यसैमा आफ्नो सफलता ठाने– मेरो प्रस्तावलाई बुझ्न सक्ने शक्ति पनि हुनुपर्छ । यिनीहरू मौलिक सिद्धान्तदेखि उस्तै डराउँछन्, जस्तो बिरालोदेखि मूसो ।

मीटिङ्मा हेडमास्टरले नै राखेको प्रस्ताव स्वीकृत भयो । कोठाबाट आइपुग्नासाथ ड्इङ मास्टरले तिनको हात समातेर भने "नन्दराजजी,, आज मकहाँ आउनुहोस् न । साढे सात बजे मैले एकदुई गवैयालाई बोलाएको छु, रमाइलो गरौंला, अरू मास्टरहरूलाई पनि बोलाएको छ । मेरै घर- मा खाने....... ।"

नन्दराजले खुशीसँग निमन्त्रणा स्वीकार गरे । ड्इङ मास्टर यस्तै छ । केही न केही रमाइलो गरिरहन्छ । कहाँबाट पैसा पाउँदो रहेछ ? आफू ४५ रु. मात्र पाउँछ । लुगा सूटै लाउँछ । घरको सम्पन्न छ भनूँ भने ४५।- मा किन झुलिरहेछ ? एकलै भए पनि ४५ भनेको क्या हो र ? ड्इङ मास्टरलाई कसले टयूशनमा राख्छ र ?

घरमा आएर लुगा फुकाले, कुल्ला गरे । दुलही एक रिकापीमा मिठाई लिएर आइन् । उनले जिज्ञासाको दृष्टिले दुलहीतिर हेरे । दुलहीले भनिन् "उमानाथले लिएर आएको थियो ।"

नन्दराज क्वाप्प पेडा मुखभरि हालेर गम्न थाले, "उमानाथ सुशील केटो छ । पढ्नामा पनि तेज थियो, यता के भएर बिग्र्यो ।"

फेरि साँझ परेपछि ड्इङ मास्टरकहाँ जान हिंडे । मास्टरकहाँ खासा मजलिस जमेको रहेछ । तबला, हारमोनियम र सितारको ध्वनिले कोठा पूर्ण थियो । सिगरेटको धूवाँले कोठा धमिलो भएको थियो ।

नन्दराज पुग्नासाथ सबले बडो उत्साहसँग उनलाई स्वागत गरे । फेरि एकछिनपछि तबला बज्न थाल्यो, सितार झन्न भयो । एउटा गाउन थाल्यो– पिया बिना आवे नहीं चैन..... ।

यो गानाको गूढ रसास्वादन गरेर त्यहाँ भेला भएका शिक्षकवर्गमा एक किसिमको बिजुली पस्यो । नन्दराजले हात अघि सारेर सिगरेटको डब्बा टिपे । एउटा सिगरेट लिएर खान थाले ।

आवे चैन नहीं अँ. अँ. अँ...... गवैयाले गाना समाप्त गऱ्यो र एउटा बीडा पान मुखमा हालेर रुमालले पसिना पुछ्न थाल्यो । त्यसपछि ड्इड मास्टरले हारमोनियम नन्दराजको अगाडि सारेर भने "अब तपाईं गाउनुहोस् ।"

नन्दराजले विचलित नभै भने– "लौ लौ, तपाईं शुरु गर्नोस् न ।" ड्इड मास्टर गाउन थाल्यो । तिनले गाई सिध्याउनासाथ हारमोनियम फेरि नन्दराजको अगाडि राखेर भने– "अब तपाईं गाउनुहोस् ।"

तिनको भन्ने ढङ्ग हाँसोउठ्दो थियो । त्यस्तो ठट्टाको कुरो तिनी गम्भीर भएर भन्ये "लौ आरम्भ होस् न ।"

सब मास्टर कोलाहल गरेर हास्न थाले । नन्दराजले आफ्नो सफलतामा प्रसन्न भएर पछिसम्म भनिरहे "आरम्भ होस्, आरम्भ ।"

जतिचोटि तिनलाई मास्टरहरू गाउन आग्रह गर्थे, उतिचोटि तिनी एकोहोरो भनिरहन्थे "अब शुरु होस् न, म त छँदैछु नि" उतिचोटि शिक्षकहरू यस ठट्टालाई नूतन उत्साहले ग्रहण गर्थे ।

कुनै मास्टरलाई स्कूलपट्टिको कत्ति ध्यान थिएन । सारा कुरो बिर्सेर त्यहींको रमाइलोमा मग्न थिए । सिगरेट त्यति तिनीहरूले कहिले खाएका थिएनन्, एउटा सिद्धिंदा-नसिद्धिंदै अर्को आउँथ्यो ।

गाना हुँदा जहाँ ताल दिनुपर्छ त्यहाँ नबिराई सबै ताल दिन्थे वा टाउको हल्लाउँथे र निश्चित स्थलमा वाह वाहको ध्वनि सबैको कण्ठबाट निस्कन्थ्यो ।

नन्दराजलाई अचानक आफ्नो कालेजको दिनको सम्झना भयो । त्यो पुरानो उत्साह बिस्तार बिस्तार तिनको शरीरमा प्रवेश गऱ्यो । तिनी बडा प्रसन्न थिए । कालेजको दिन सधैंका निम्ति गयो भनेको अझै गएको रहेनछ ।

अचानक गाना समाप्त भयो । सब खान बसे । के केटाकेटी त्यति हारालुछ गर्लान्, कोलाहल मच्चाउलान्, त्यति आफूलाई बिर्सेर मिठाई मुखभित्र हाल्नपट्टि लाग्लान् ।

नन्दराजले भने "यी मिठाईहरू त रामभण्डारका हुन् कि ?"

कसैले उताबाट जवाफ दियो "नत्र अरू कहाँ यस्तो मिठाई पाइन्छ र।"

ड्इङमास्टरले भने "रामभण्डारको होइन । एउटा अर्को मिठाईको पसल मैले देखेको छु। बाहिरबाट हेर्दा त सानो पसल छ तर मिठाई त्यस्तो रामभण्डार के बनाउन सक्ला ?"

सब मास्टरहरू छक्क परेर सोधे "त्यो कहाँ छ, त्यो पसल ?" भोजन समाप्त भएपछि सब आफ्ना आफ्ना घरतिर लागे।

साढे दश बजिसकेको थियो । सडकमा एक-दुई जना मान्छे मात्र हिँडिरहेका थिए । सडकमा आएपछि नन्दराज अचानक उदास भए । एकलै थिए । बाटो बीचबीचमा अँध्यारो थियो । त्यो उत्साहपछिको त्यो दृश्यले उनलाई अनायास उदास पाऱ्यो। घर पुगे। तल ढोका बन्द थियो। तिनले धेरै बेर ढोका घचघच्याएपछि नोकर्नी बुढियाले लालटेन लिएर आएर ढोका उघारी। उनी सोझै आफ्नै सुत्ने कोठामा पुगे। उनकी पत्नी सुतिसकेकी थिइन्। उनी लुगाहरू फेरेर आफू पनि बिछौनामा गए। यसो उनले पत्नीलाई घचेटेर आफ्नो सुत्ने ठाउँ तुल्याए। उनकी पत्नीले नीदैमा के बरबराइन् र पलट्ट पल्टेर भित्तानेर पुगिन्। नन्दराजले सुत्ने प्रशस्त ठाउँ पाए। उनी मनमा के के कुरा खेलाउँदै निदाए।

# सखी

चन्द्रकुमारी आत्तिदै आफ्नी सखीकहाँ गइन् । इन्द्रमायाले चन्द्रकुमारीको फुङ्ग उडेको अनुहार देखेर आत्तिएर तिनलाई समात्न पुगिन् । चन्द्रकुमारी सहारा पाएर झन् लत्त छाडेर इन्द्रमायाको काँधमा हात राखेर आलिङ्गन गर्दै झुन्डिइन् । इन्द्रमायाले तिनलाई सहारा दिँदै कोठाभित्र ल्याएर बिछौनामा बसाल्दै सोधिन् "क्या हो चन्दा, के भयो, किन यसरी आत्तिएकी ?" चन्द्रकुमारीले चिसो लामो सास फेरेर भनिन् "दीदी, मेरी सखी, मैले यता विचित्र अनुभव गरें । यसले, मलाई बडो विचित्र अत्याहट पनि हुन्छ, चित्तमा पटक्क शान्ति छैन । तिमीलाई थाहा नै छ, यता पन्ध्र दिनदेखि तिमीकहाँ म आइनँ । मलाई क्षमा गर, म त एउटा भुँवरीमा परेको थिएँ र यो पन्ध्र दिन रिंगटा लागुन्जेल त्यो भुँवरीमा परेर फनफनिएँ ।

इन्द्रमाया तिनको देब्रे हात आफ्नो हातमा लिएर सुमसुम्याउन थालिन् । चन्द्रकुमारी एक छिन चूप लागिन् र फेरि भन्न थालिन् "कसरी थालूँ ? कुन छेउबाट प्रारम्भ गरूँ ? मैले राम्ररी कुरा पुऱ्याउन र शृङ्खलाबद्ध कुरा भन्न सकिनँ भने नआत्तिए । सब सुनिरहूँ । म नलुकाई सबै कुरा तिमीलाई भन्छु ।"

हाम्रो घरको एउटा कोठामा बहालमा एउटा युवक बस्न थाल्यो । त्यो नेपालमा कार्यविशेषले आएको रहेछ र केवल पन्ध्र दिन मात्र नेपाल बस्ने त्यसको काम रहेछ । अब तिमी भनौली यति चाँडै पन्ध्र दिनमै कसरी कुरा भयो त ? कसरी तिमीलाई बुझाऊँ, कसरी त्यसको व्यक्तित्वको वर्णन गरूँ ? आँधिबेहरी के हो कुन्नि, तर त्यो निश्चय नै साधारण युवक थिएन । त्यसलाई देख्नेबित्तिकै एक्कासि मान्छे त्योतिर आकृष्ट हुन्छ र एकचोटि तानिएपछि कहाँसम्म पुग्ने हो कोही भन्न सक्तैन ।

मेरो पतिको त त्योसित उत्तिखेरै घनिष्ठता भयो र हाम्रो कोठामा त्यो सजिलैसँग आउन-जान थाल्यो । मैले एकचोटि मेरा पतिलाई भनें पनि- "क्या हो सरासर त्यो हाम्रो कोठामा आउँछ । मलाई त अप्ठ्यारो पनि लाग्छ र मलाई त्यो मानिस मन पर्दैन ।" उनले मेरो कुरा सुनेको नसुन्यै गरे त्यसै दिनदेखि यो भयानक अनुभवको सूत्रपात भयो ।

हाम्रो कोठा र उसको कोठाको माझमा काठको भित्ता थियो । एक दिन राती दश बजेको हुँदो हो, तिम्रा हुस्सू भाइलाई निद्रा परेन । उता उसको कोठामा पनि बत्ती बलिरहेको थियो, उनी त्योसँग कुरा गर्न उसको कोठामा गए । म कान थापेर तिनीहरूको कुरा सुन्न थालें । तिनीहरूलाई सिगरेट खान मन लाग्यो । तिम्रा भाइले वहींबाट कराए "ए, सिगरेटको डब्बा यता ल्या त ।" उनले यति के भनेका थिए, त्यो युवकले भन्यो "उहाँ सुतिसक्नुभयो होला, उहाँलाई कहाँ कस्ट दिनु, म नै लिएर आउँछु ।" त्यो सरासरी मेरो कोठामा आयो मैले हतारमा सुतेको भाव ल्याउन पनि पाएको थिइनँ । त्यसले भन्यो "सिगरेट कहाँ राखेको छ ?" मैले आत्तिएर सिरानबाट सिगरेटको डब्बा त्यसलाई दिएँ । किन हो कुन्नि मेरो हात काम्यो । उसले कामिरहेको हातलाई देख्यो र सिगरेटको डब्बा समात्न छोडेर मेरो हात समात्यो । म मूर्ख, मेरो मुखबाट निस्क्यो "के गरेको ? तिनले थाहा पाए भने ।"

उसले झन् सुरिएर भन्यो "मलाई म्वाई देऊ न !" म त आत्तिएँ । मैले बडो यत्न गरेर प्रार्थनाको वाणीमा भनें "मलाई छाड, म प्रार्थना गर्छु, बरु...... पछि.... ।"

त्यो युवक एकछिन पत्थरको मूर्तिझैं निश्चल भएर उभिरह्यो । पछि मुसुक्क हाँसेर "लौ त" भनेर कोठाबाट बाहिर निस्क्यो ।

त्यो आफ्नो कोठामा गएर मेरा पतिसँग कुरा गर्न थाल्यो । म एक छिनसम्म जाडोले काठिएजस्तो भएँ । जब उनी सुत्न आए, मैले भनें "त्यो कहिले जान्छ ?" उनले सोधे "किन ?" मैले परिणामको वास्तै नगरेर भनें "मलाई त्यो मानिस बदमाशजस्तो लाग्छ ।"

उनले शङ्कित भएर प्रश्न गरे "किन ?" मैले परिस्थिति सम्हाल्ने कोशिश गरेर भनें "तिमी-हामी बसेका बखतमा त्यो सरासर हाम्रो कोठामा आउँछ, यो कस्तो चाला ? अहिले सिगरेट लिन आएको थियो ।"

मेरा पतिले भने "हेर, तिम्रो त बडो शङ्का गर्ने बानी रहेछ । त्यो त्यस्तो आत्मीयता देखाउँछ, तिमीचाहिं त्यसको चालमा शङ्का गर्छ्यौ ?"

भोलिपल्ट म सिंढीबाट तल झर्न थालेकी थिएँ । करुवा लिएर तिम्रो भाइको निम्ति पानी लिन झरिरहेकी थिएँ, त्यो युवक त्यही मौकामा माथि उक्लिरहेको थियो ।

उसले बाटो छेकेर भन्यो "म्वाइँ देऊ, हिजो पछि दिउँला भनेकी थियौ ।" मैले कातर भएर भने "मलाई नाश गर्न कम्मर कसेका छौ ?" उसले छक्क परेर भन्यो "तिम्रो नाश । मैले तिम्रो म्वाइँ खाए तिमी नाश हुन्छ्यौ । के भनेकी ?" मैले फेरि भनें "अबेर भैरहेछ, माफ गर, पानी लिएर छिटै पुग्नु छ, माफ गर ।"

त्यसले मेरो प्रार्थनाले प्रभावित नभएर भन्यो "एकचोटि च्वाक्क दिन कति बेर लाग्छ र ?"

त्यो प्रति असीम घृणाको भाव मेरो हृदयमा उदय भयो । मैले भनें, "बाटो छोड्छौ कि चिच्याऊँ ?"

उसले महान् आश्चर्य प्रकट गरेर सोध्यो "तिमी रिसायौ ?" मैले परास्त भएर भनें "अहिले होइन, पछि ।"

त्यो जस्तोसुकै बदमाश भए तापनि एउटा कुरा त कबूल गर्नैपर्छ । त्यसले कहिले बलजफ्ती गरेन । मैले पछि भन्नासाथ मेरो

घाटो उत्त्खिँरै छोड्यो । त्यसले बलजफ्ती मलाई ट्याप्प समातेर आफ्नो अभिलाषा पूर्ण गरेको भए ?

म स्वीकार गर्छु त्यसको चरित्रको यो सानो अभिव्यक्तिले म साह्रै प्रभावित भएँ। त्यसलाई सरासर नजाती कसरी भनूँ ?

मेरा दुलहा दिउँसो बजार गएका थिए । त्यो युवक आफ्नो कोठामा बसेर कुन्नि के लेख्नमा व्यस्त थियो । म आफ्नो कामले भान्सा र आफ्नो सुत्ने कोठामा ओहोरदोहोर गरिरहेकी थिएँ । त्यसको कोठा माझमा पर्थ्यो । एकचोटि त्यसका र मेरा चार आँखा भए । उसले चट्ट लेख्न छोडेर मलाई सोध्यो "अब तयार छ्यौ ?"

म केही उत्तर नदिएर आफ्नो बिछ्यौनामा लडें । अचानक शक्ति क्षीण भएजस्तो लाग्यो। मलाई किन हो कुन्नि एउटा चिठी लेख्न मन लाग्यो र कम्पित हातले केवल यत्ति लेखें "तिमी चाँडै जाइहाल्छौ रे, उसमा पनि केवल म्वाई खान किन खोज्छौ ?"

मैले त्यो कागत भित्ताको प्वालबाट त्यसको कोठामा खसालिदिएँ र निद्रा नलागे पनि आँखा टम्म चिम्लेर बिछ्यौनामा सुतें। मेरो मुटु ढुकढुक गरिरहेको थियो, घाँटी सुक्तै आयो । निसास्सिउँलाजस्तो भएँ।

त्यसपछि त्यसको बडो अनौठो व्यवहार हुनथाल्यो । अचानक त्यसले मेरो वास्ता नै गर्न छोड्यो । केवल कोठाभित्र बसेर लेखपढ मात्र गरिरहन्थ्यो । त्यसको व्यवहार अत्यन्त रीसउठ्दो थियो । बीचबीचमा मेरो मन रीसले कराउँथ्यो– "त्यसको के हक, त्यसको के अधिकार ?" त्योचाहिं निर्विकार भएर आफ्नो काममा व्यस्त भएको जस्तो देखिन्थ्यो। एक दुईचोटि म त्यसका कोठाभित्र पनि बडो साहस गरेर पसें। त्यो किताबबाट आँखा उठाएर मतिर यसो पुलुक्क हेर्थ्यो र फेरि किताब पढ्न व्यस्त हुन्थ्यो । म यो अन्यायले भित्रभित्रै डढेर खरानी हुन्थें, लज्जित हुन्थें। मेरो बेइज्जती गर्न त्यसले कम्मर कसेको थियो।

एक दिन त्यो के लेखिरहेको थियो । म त्यसको कोठामा गएँ । मूर्तिलाई एकचोटि निरीक्षण गरेको जस्तो गरेर मलाई चिसो आँखाले हेरेर लेख्न थाल्यो । म झम्टेर गएँ र त्यसको कापी

खोसेर च्यात्न थालें । त्यो छक्क परेर "के गरेकी ?" भन्न थाल्यो । म कापी च्यात्दै जान्थें, रुँदै जान्थें, भन्दै जान्थें, "लौ जा, लौ, पापी, निष्ठुर, वदमाश, दगावाज, लौ अरू लेख् ।"

म आफ्नो कोठामा आएर खूब रोएँ र त्यस पापीलाई खूब सरापें । रुँदारुँदा थाकेर सास फेर्न मलाई गाह्रो हुनलाग्यो ।

त्यो मेरो कोठामा आएर व्यग्र भएर सोध्यो, 'के भयो, हँ ?'

मैले आफ्नो सारा शक्ति बटुलेर सारा घर थर्काउने गरेर चिच्याएँ,

'निस्की यहाँबाट ।'

त्यो फनक्क फर्केर बाहिर निस्क्यो । म धेरैबेर रोइरहें ।

फेरि पति आउनासाथ मैले भनें, "त्यो कहिले जान्छ ? हाम्रो घर छोड्न त्यसलाई भन ।"

उनले सोधे, "त्यसले केही अनुचित व्यवहार गऱ्यो र ?

म यसको उत्तर के दिन्थें ? मैले भनें, "तिमी पनि बाहिर जान्छौ । मलाई एक्लै यो घरमा एउटा युवकको नजीकै बस्न डर लाग्छ ।"

मलाई त्यस दिन आफ्नो पतिको असाध्य माया लाग्यो । मैले तिनीसँग टाँस्सिएर रातभरि आफ्नो भित्रको डरलाई बिर्सने प्रयत्न गरिरहें । एउटा नूतन प्रेमको वेग मेरो हृदयमा बग्न थाल्यो । यस्तो तीव्र प्रेमको अनुभव मलाई कहिले पनि भएको थिएन । आफ्नो पतिको न्यानो छातीमा टाउको राखेर उनका मुटुको ढुकढुक सुन्दा मलाई अवर्णनीय सुखको अनुभव भयो ।

साँच्चै भनूँ भने, दिदी; मैले त्यस दिनदेखि पो आफ्नो पतिलाई माया गर्न थालें ।

अब मलाई त्यस युवकप्रति घृणाको भावना छैन । यथार्थमा त म त्यसको कृतज्ञ छु ।

आज त्यो गयो । म दिनभरि विचलित थिएँ, हृदयमा शून्य अनुभव गरिहेकी छु र झन् मेरो पति बजार डुल्न गए ।

अब मलाई एउटा कुराले छटपटी पारिरहेको छ । त्यो युवकलाई जाती भन्नु कि नजाती ? त्यो मेरा निम्ति एउटा रहस्य भयो । यसले मेरो मनमा खुलदुली परिरहेछ ।

चन्द्रकुमारीले जिज्ञासाका दृष्टिले इन्द्रमायातिर हेरिन् । इन्द्रमाया छक्क परेर सुनिरहेकी थिइन् । पछि तिनको मनमा यो प्रश्न उठ्यो– "चन्द्रकुमारी किन आत्तिएकी ?"



# स्वेटर

तिनताका बजारमा थरीथरीका ऊन आएका थिए । कार्तिकतिर पसलेहरू बाहिरबाट ऊन झिकाउँथे र लोभ्याउने गरी ऐनाको बाकसमा राख्थे वा फलफूलजस्तो गरेर गुच्छाका गुच्छा पसलमा झुन्ड्याउँथे ।

मैयाँले कालोमा सेतो छिरिबिरी भएको ऊन किनेर ल्याइन् । यसको स्वेटर बुन्ने । ऊन किन्दा उनले आफ्नो शरीरको रङ्गको ध्यान राखेकी थिइन् । गोरो आङमा कालो खूप खुल्छ त्यसमा पनि चन्दन छरेको जस्तो सेतोसेतो छिरिबिरी परेकोले कालो रङ्गको अन्धकार हराउँछ । मैया आफ्नो रोजीमा खूप खुशी थिइन् ।

उनी दिउँसो भात खाएर स्वेटर बुन्न बस्थिन् । छिमेकका उनका सहेलीहरू पनि ऊन र काँटा लिएर उनीकहाँ आउँथे र कुरा गर्दै स्वेटर, मोजा वा पन्जा, ज्याकेट बुन्थे । मैयाँले किनेको ऊनलाई देखेर सब लोभिए "कहाँ किन्या हँ ? कति दाम पर्‍यो ?"

सबले पालैसँग त्यस ऊनलाई स्पर्श गरे । कपालमा औंला पसाएर कोरेको जस्तो गरेर त्यो ऊनको गुच्छामा औंलाहरू पसाएर त्यसको धागोको बनावटको अध्ययन गरेर सबले एकमत भएर भने "खूप राम्रो ऊन रहेछ ।"

मैयाँले एकछिन स्वेटर बुन्दाबुन्दै आँखा उठाएर भनिन् "त्यै मैयाँको पसलमा मात्रै पाइन्छ । हारालुछ छ रे यस ऊनको निम्ति । तिमीहरूलाई चाहिए छिटै किनिहाल ।" फेरि एक छिनपछि चार औंला मात्र बुनिसकेको स्वेटरलाई टाँसेर उनले सोधिन् "कस्तो लाग्छ हँ ?"

सबले भने "खूब खुल्छ ।" विमलाले भनिन् "हाम्रो त्यस्तो पहेंलो छाला छैन । " आफ्नो पाखुरा उल्टाई पल्टाई हेरेर फेरि भनिन् "यो डढेको जस्तो छालामा त्यो ऊन के सुहाउला ?"

तर जानकीको आफ्नो शरीरको रोगनको विषयमा उति नैराश्यपूर्ण विचार थिएन । उनले मनमनै त्यस्तो छिरिबिरी परेको कालो ऊन किन्ने निश्चय गरिन् । तर प्रकाशमा विमलाकै कथनको पुष्टि गरिन् ।

त्यो पछि सबजना एकाग्र भएर बुन्नमा व्यस्त भए । एकछिन त्यो कोठामा शान्ति छायो । तिनीहरूका औंला साँपका जिभ्राजस्ता चलिरहेका थिए ।

शान्ति भङ्ग गर्दै मैयाँले सोधिन् "कति घर बनाऊँ हँ ?" जानकीले थाहा पाईपाईकन पनि बूझ पचाएर सोधिन् "कसलाई बनाएको त्यो स्वेटर ? भुँडेलाई भए धेरै घर चाहिन्छ, दुब्लो भए थोरै । कुन भाग्यमानी त्यो हो कुन्नि ? नथाहा पाई कसरी भनूँ कति घर चाहिन्छ ?"

मैयाँले क्रोधको भाव देखाउँदै भनिन् "यी जानकीलाई त बेला न कुबेला ठट्टा मात्रै छ । मैले आफैलाई स्वेटर बुन्न थाल्या क्या ! बुझ्यौ ?"

मण्डली खित्का छोडेर हाँस्यो ।

मैयाँले त्यति भन्न त भनिन् तर छिनछिनमा यो ध्यान पनि आउन थाल्यो, यस्तो राम्रो ऊनको स्वेटर कसैलाई बनाएर दिन पाए ? आफैंले बनायो आफैंले लायो, के स्वाद ?

जानकीले ठट्टा छोडेर भनिन् "तिमीलाई भए सत्तरी घर चाहिएला । अस्सी घरसम्म बनाए हुन्छ ।"

मैयाँ स्वेटर बुन्न लागिन् । उनले निश्चय गरिन् "बनाउँदै जाऊँ, पछि जे गर्नुपर्ला गरौंला ।"

हरिमाया अहिलेसम्म चुप्प थिइन् । तिनले सिटी बजाएको स्वरमा भनिन् "मलाई घाँटी बनाउन आएन ।"

विमलाले तिनको हातबाट ऊन खोसेर घाँटी बनाइदिन थालिन् । हरिमाया वडो ध्यानपूर्वक हेर्न थालिन् ।

दिन प्रतिदिन मैयाँले बनाएको स्वेटर आफ्नो वास्तविक रूप धारण गर्न थाल्यो । केही समयमा उनले निश्चय पनि गरिन् "गजराजलाई बनाएर दिन्छु । कति गद्‌गद् होलान् ?" एकचोटि उनले भनेका पनि थिए "मैयाँ, मलाई एउटा स्वेटर बनाइदिन्नौ ? तिमीले बनाएको स्वेटर लाउने साह्रै रहर छ ।" हो गजराजलाई नै बनाएर दिन्छु । 'भी कालर' को बनाउनुपर्छ ।

तर दुर्भाग्यवश स्वेटर जतिजति तयार भयो, उतिउति त्यसको रूप बिग्रँदै गयो र बनिसक्ता पट्ट छन्द नपरेको भयो । तकियाको खोलजस्तो ह्वालाङ्ग परेको । मैयाँ अत्यन्त दुःखित भइन् । न आफूले लाउनेजस्तो भयो, न झन् कसैलाई उपहार दिनेलायक भयो । उनले त्यसलाई नोकरलाई दिइन् "रामे तँलाई भयो" । रामे स्वेटरलाई लिएर मुखभरि चाउरी पारेर हाँसेर कृतज्ञताको परिचय दिँदै उभिरह्‌यो ।

मैयाँले भनिन् "मैले आफैले बनाएको, लैजा ।"

त्यसको उत्साह देखेर मैयाँ खुशी भइन् । तिनको मिहिनत व्यर्थ गएन । रामे कति खुशी भयो । त्यस्तालाई पो दिंदा आत्मा प्रसन्न हुन्छ । गजराज उनले बनाएको स्वेटर पाएको भए खूब खुशी हुन्थे तर जति रामे प्रसन्न होला, जति उसको आत्माको तृप्ति भएको होला, त्यति गजराजको कहाँ हुन्थ्यो ।

साथीहरूले सधैंको जस्तो भेला भएको वेलामा सोधे "त्यो स्वेटर खोइ कसले पायो ?"

"रामेलाई दिएँ, राम्रो भएन । कसले लाउँथ्यो त्यस्तो र ?" जानकीले जिस्क्याएर भनिन् "मैयाँको कृपा पाउने भाग्यवान् नभए को होला ?"

मैयाँ आगो वसाउँलाझैं गरेर हेरेर भनिन् "जनकी, तिमी धेरै बढीबढी कुरा गर्न थाल्यौ ? ठट्टाको सीमा हुन्छ ।"

जानकी त्यति भन्दैमा के मान्थिन् । अरूहरूतिर मुण्टो फर्काएर भन्न लागिन् "के मैले झूटो भनेकी हुँ र ? मैयाँको मिहिनतको फलको सुख पाउने को भयो ?"

सबले एक शब्दमा भने "रामे ।" मैयाँ परास्त भइन् ।

त्यसपछि मैयाँलाई जान्ने सबै मान्छेले मैयाँले एउटा स्वेटर बनाएर आफ्नो नोकरलाई दिइन् रे भन्ने कुरा थाहा पाए । छिमेकमा त त्यो कुरा घर-घरमा फिंजियो । बूढाबूढीहरूले कान थुने "के सुन्नुपरेको हो ?"

दौंतरीहरूले यो कुखुरामा खूब चाख माने । घरघर कतिले थपडी बजाए, कतिले टाउको मात्र हल्लाए । मैयाँको यो कार्यको औचित्य र अनौचित्यमा निकै छलफल भयो ।

एक दिन मैयाँ छिमेककी एउटा सखीकहाँ गएकी थिइन् । तिनले मैयाँको हात समातेर कसैले नदेख्ने र नसुन्ने ठाउँमा लगेर भनिन् "मानिसहरू के भनिरहेका छन् । तिमीले स्वेटर बुनेर रामेलाई दियौ रे ?" मैयाँले भनिन् "दिएँ त के भयो ?"

छिमेकीले भनिन् "हुन त के भयो र हल्ला भयो । त्यस्तै गर्ने हो भने सुटुक्क पो गर्नुपर्छ त । मुलुकमा झ्याली पिट्दै किन गर्नु परेको ?"

मैयाँ एकछिन दोषीजस्ती भइन् । उनले आफ्नो मनको कुरा बुझाउने प्रयत्नमा भनिन् "होइन, स्वेटर दिँदैमा के भयो त ? यतिमै कुरा गर्छन् भने मेरो के लाग्छ त ? म मुलुकको मुख थुन्न सक्तिनँ ।"

उनकी सखीले भनिन् "मैले तिमीलाई नजाती काम गर्‍यौ भनेको त होइन तर चलाकीसँग गर्न सकिनौ भनेको पो त । तर मलाई पनि खुलदुली लागिरहेछ । कसैलाई नपाएर नोकरलाई ।"

मैयाँ रन्किन् "नोकर के मानिस होइन ? अचेलको समानताको युगमा पनि तिमी नोकर र मालिकको भेद गर्छ्यौ ? अब यसै भन्यौ उसै भन्यौ, साँच्ची भनूँ भने, के कसैको खटनमा प्रेम भिड्छ र ?"

एक छिन मैयाँ झस्किन् "के भनेकी ? प्रेम ? कहाँबाट यो प्रेमको कुरा आयो ?" तर रीसको झोंकमा कुनै अङ्कोको वास्ता नगर्दै भन्न थालिन् "बुझ्यौ रमा, प्रेम कसैको कर र खटनमा रहँदैन । यो एउटा ईश्वरीय शक्ति हो, जो ऊँचनीचमा भेद देख्दैन । हाम्रो आत्माको आँखा यो बाहिरको आँखाभन्दा बेग्लै हुन्छ ।"

रमाले भनिन् "मैयाँ, तिमी त रिसायौ । तिमीले भनेको कुरा सत्य हो । हाम्रो समाजले रचेको ऊँचनीचको मान शुद्ध प्रेमले मान्दैन । रामेलाई नोकर भनेर त्यो तिम्रोहाम्रो प्रेमको अधिकारी छैन म भन्दिनँ । तर अनुहार पनि त हुन्छ नि । मलाई दुनियाँको आठौं आश्चर्य यो लागिरहेछ । के देखेर तिमी ऊसँग रिझियौ । उमेरमा पनि त्यो छिप्पिएको छ । केही नभए पनि ३५ त भयो होला । तिमी भने २१ की मात्र छ्यौ ।"

मैयाँलाई यस्तो थोत्रो कुरा मन परेन । उही पुरानो विचार । उनले उठ्दै भनिन् "रमा, तिमीले प्रेम भनेको क्या हो चिनेको छैन । तिम्रो निम्ति प्रेम धनमा छ, सुखमा छ, इन्द्रियको तृप्तिमा छ । म भने प्रेमलाई यी सबभन्दा भिन्न मान्छु, बुझ्यौ ?"

उनी त्यति भनेर फुत्त बाहिर आइन् । मालिक्नी नभएको थाहा पाएर नोकरहरू जम्मा भएर रामेलाई जिस्क्याइरहेका थिए "रामे के भन्छस् अब ? मैयाँले आफ्नै बाहुलीले बनाएर स्वेटर तँलाई बक्सियो । लाटा, के बुझिस् ?"

रामे अप्ठ्यारो मानेर स्वेटर मुसार्दै हाँसिरहेको थियो ।

मैयाँले कोठाभित्र पस्ने वखतमा यो कुरा सुनिन् । उनलाई नोकरहरूले मिलेर रामेलाई जिस्क्याएको मन परेन तर उत्तिखेरै गएर नोकरहरूलाई ताडन गर्ने पनि साहस भएन ।

# बौलाहा

म सातामा दुइचोटि भ्यालखाना जान्थें र चोर, डाँकू र समाजका अरू भयानक प्राणीलाई तिनका आत्माका शुद्धिको निमित्त गीता, पुराण, मनुस्मृति र अरू धर्मग्रन्थको व्याख्या गर्थे । तिनीहरूका आत्माको उद्धार गर्नु मेरो ध्येय थियो.। म सरकारबाट यसै कामको निमित्त नियुक्त थिएँ ।

म एक दिन आफ्नो पवित्र कार्यमा व्यस्त थिएँ । मलाई घेरेर तीसजना जति धर्मज्ञानका इच्छुक कैदीहरू बसेर मेरा कुरा सुनिरहेका थिए– "परन्तु जो मान्छे आत्मामा नै प्रेम गर्छ अनि आत्मामा नै तृप्त रहन्छ एवं आत्मामै सन्तुष्ट रहन्छ त्यसले गर्नु पर्ने कार्य केही बाँकी रहँदैन ।" गीताको तृतीय अध्यायको सत्रौं श्लोकको अर्थ म भनिरहेको थिएँ "तिमीहरूले धेरै कुकर्म गर्‍यौ चोरी, डकैती र अरू अत्याचार गर्न बाँकी राखेनौ । अब पनि चेत, आत्मालाई चोखो पार ।"

"जस्तो कमलको पातमा पानी....... ।

त्यो बखतमा त्यो कुनामा बसेको मान्छे, जो सशङ्कित दृष्टिले यसो मलाई हेरेर आफ्नो चारैतिर हेरिरहन्थ्यो, चिच्यायो "के भन्यौ पण्डित ? के मनपरी बिहानदेखि फतफताइरहेछौ । छेउ न टुप्पो । अर्थ न बर्थ ।"

त्यसको विषयमा मलाई पहिलादेखि नै शङ्का थियो । त्यो घुम्लुङ्ग ओढ्ने ओढेर कुनामा बस्थ्यो, फोहोरी, पोल्दापोल्दै उम्केको कालो निष्प्राण आकृतिको, दुब्लो थियो । आँखा चिमचिम गरिरहन्थ्यो ।

त्यो डराएको जस्तो गरेर आफ्नो चारैतिर हेरिरहन्थ्यो । फेरि एकछिन चूप लागेर घुँडामा मुण्टो गाडेर केही गमेको जस्तो गर्थ्यो ।

त्यो एक्कासि चिच्यायो "के भन्यौ पण्डित ? के मनपरी विहानदेखि फतफताइरहेछौ ? छेउ न टुप्पो, अर्थ न बर्थ ।"

अरू कैदीहरू त्यसलाई समातेर भ्काङ्गल भ्फुङ्गल गर्न थाले, त्यो भने चिच्याइरह्यो । जेलका सिपाहीहरू आए, त्यसलाई पिटपाट गरेर घचेट्तै उसको सेलतिर लगे ।

त्यसले चिच्याउन त छोडेन, भनिरह्यो "त्यो पण्डित भ्फूटो हो, बकवादी हो ।"

म आफ्नो पुण्यकार्यमा तल्लीन भएँ– "जस्तो कमलको पातमा पानीको केही पर्दैन, त्यस्तै आत्मा.......।"

उता उसको सेलबाट उसले चिच्याएको प्रतिध्वनि नर्कको सबभन्दा गहीरो गर्तबाट उठेको बाफजस्तो आइरहेको थियो "सब भ्फूटा हुन्, ठग, लुच्चा ।"

मैले धर्मव्याख्यान समाप्त गरें । मलाई त्यसको ईश्वरहीन व्यवहारले त्यसका विषयमा जान्ने उत्सुकता भयो, त्यसका उत्तेजित शब्द "के बकवास गरिरहेछौ, पण्डित ।" - ले मलाई किन हो कुन्नि प्रभावित पार्‍यो म भ्यालखानाबाट निस्केर सुपरिन्टेन्डेन्टकहाँ गएँ ।

मेरो कुरा सुनेर उनले भने "पण्डितजी, त्यो बौलाहा हो, किन त्यसलाई बाहिर आउन दिंदारहेछन् ?"

मैले सोधें "त्यो कुन मुद्दामा परेको हो ?" उनले भने "चोरीको । त्यो कस्तो दुस्साहसी भने दिउँसै चारी गर्न हिंड्यो । कोठाभित्र पस्न मात्र पाएको थियो, नोकरहरूले त्यसलाई समातिहाले । त्योचाहिं चोर्न थालेको बाकसलाई च्यापिरहेछ पिटाइ खाइरहेछ । त्यसले के भन्ठानेर बाकसलाई च्याप्यो होला ? बाकस त्योसँग खोस्न बडो गाहारो परेछ । बाकस त्योसँगबाट खोसिएपछि डाँको छोडेर रुन थाल्यो, अड्डामा यस्ता बाठा चोरहरू जजहरूलाई आफ्नो तर्कले प्रभावित गराउन र आफ्नो पक्षमा फैसला लिन रुने ठाउँमा रुन्छन्, प्रार्थना गर्नु पर्ने ठाउँमा हात जोरेर

जीउजीउ गर्न थाल्छन् । त्यो पनि रुँदै भन्न थाल्यो "जजसाहेब, मेरी दुलही मर्न आँटेकी थिई, औषधि र पथ्यलाई रुपियाँ खोज्न हिंडेको । मलाई नथुनिबक्सियोस् ।" कहीं जज पनि त्यस्तो भनाइको भरमा कानूनको विरुद्ध काम गर्न सक्थे ? छ महीनाको सजायँ दिए । त्यो सजायँ सुनेर बालक रोएको जस्तो गरेर रुन थाल्यो र उत्तिखेरै सद्दे मान्छे बौलाएको जस्तो गर्न थाल्यो । अघिसम्म त्यसरी सद्दे कुरा गर्ने उत्तिखेरै कसरी बौलाउँथ्यो । त्यसको जाल हो । तर जजको नियमबमोजिम त्यस्तो भाँडभैलो बौलाहाभैं जेलमा २४ घण्टा थुनेर राख्नु पर्ने हुनाले त्यसलाई जेलमै थुन्ने गरेको छु । बदमाश कहाँको । पण्डितजीलाई कष्ट भएछ । जेलका सिपाहीहरू हेरिरहेका थिए ?"

मैले फेरि प्रश्न गरें "त्यसकी दुलही नि ? त्यसलाई के भयो ?"

"मलाई के थाहा । एकचोटि १५ दिन भयो, दुलही त्यससँग भेट्न आएकी थिई क्या रे, भेटेर फर्कने बेलामा त्यसलाई एकचोटि देखेको थिएँ । बिरामीजस्तो थिई पहेंली, आँखा पुछ्दै फर्किरहेकी थिई । उता त्यसको दुलहा फलामको डण्डीलाई दुवै हातले उखेलुँलाजस्तो गरेर उफ्दै फलाकिरहेको थियो– "किन मर्दिनस्, मोरी, गएर अहिले मरिहाल् । त्यसलाई बौलाहा नभनेर कस्तालाई भनूँ ?"

म निश्चित मनले भर फर्के । त्यो बौलाहा नै रहेछ । यो बौलाहा ईश्वरहीन विचारको भयो भनेर हामीहरूले त्यस्तामाथि क्रोध गर्नु हुँदैन । ईश्वर ! त्यस्ताको आत्माको उद्धार गर । हामीहरू त जो बुझ्न सक्छ त्यस्तालाई बुझाई सुमार्गमा ल्याउने प्रयत्न गर्न सक्छौं । बुद्धि नै भ्रष्ट भएकालाई तिमी नै उद्धार गर्न सक्छौ, प्रभो ! मैले गद्गद् भएर अन्तस्करणले ईश्वरको प्रार्थना गरें ।

म नियमित रूपसँग झ्यालखाना जान्थें र कुप्रवृत्तिमा आसक्त भएका कैदीहरूलाई सुमार्ग देखाउने प्रयत्न गर्थें । तिनीहरूको चरित्र मैले सपारें भन्ने मलाई विश्वास थियो किनभने तिनीहरू बडो अनुरागले ईश्वर-भजन सुन्दथे । म आफ्नो सफलतामा भित्रभित्रै बडो सुखको अनुभव गर्थें ।

एक दिन म नियमानुसार गीताको श्लोकका अर्थ लाइरहेको थिएँ । कैदीहरू प्रभावित भएर सुन्नमा तन्मय थिए "महर्षिहरूमा म भृगु हुँ । वचनहरूमा म एक ओंकार हुँ । यज्ञहरूमा म जपयज्ञ हुँ र स्थावरहरूमा म हिमालय हुँ ।"

उतावाट त्यो बौलाहा भनेको मुसुमुसु हाँसेर आयो । पहिले त झट्ट मैले त्यसलाई चिन्न सकिनँ । कपालमा तेल हालेर कोरेको, अनुहारमा एक किसिमको तेज । त्यसले फोहोर ओढ्नेको सट्टामा धोएको कमीज लाएको थियो । म एकछिन छक्क परेर त्यसलाई हेरिरहें । त्यसले वडो आदरसँग मलाई प्रणाम गऱ्यो र बस्ने उद्योग गर्दै भन्यो "त्यो त मरिछ, अस्ति ।" त्यस दिनदेखि मलाई तपाईसँग भेट्ने साह्रै इच्छा थियो । तपाईले अस्ति भनेको मलाई अहिले घोचिरहेछ "तिमीहरूले धेरै कुकर्म गऱ्यौ, चोरी गऱ्यौ र अरू अत्याचार पनि गर्न बाँकी राखेनौ । अब पनि चेत, आत्मालाई चोखो पार । पण्डितजी त्यो घत लाग्ने वाक्यले मलाई कस्तो प्रभावित पाऱ्यो ! लौ, अरू सुनाउनुहवस्, पण्डितजी त्यो त मरिछ । अब म तपाईको उपदेश सुन्छु ।

त्यो भने मरिछ, पोलिइछ, पञ्चभूतमा मिलिछ ।"

म त्यसको आशातीत सुधारमा छक्क परें । त्यसको यस्तो सुधार होला भनेर कसले भन्न सक्थ्यो ? यसरी नचिन्हिने जस्तो गरेर । ईश्वर-भजनमा त्यस्तो गुण छ । कस्तै पापी भए पनि धर्म-ज्ञान प्राप्त गऱ्यो भने त्यो निश्चय सुमार्गमा लाग्छ । व्याधाले रामको नाउँ लिंदा मोक्ष प्राप्त गरेको थियो । धन्य हो प्रभो ! तिम्रो लीला ।

म आफ्नो सफलतामा उचित घमण्ड पनि गर्न सक्छु । एउटा पापी बाँच्यो र समाजको साधु सदस्य भयो ।

म खुशी हुँदै फर्कें । सुपरिन्टेन्डेन्टले मलाई सह्राउँदै भने– "पण्डितजी, तपाईंको उपदेशको त्यस्तो प्रभाव परेछ ।

त्यसको चाल एक्कासि सप्र्यो । पहिले भोकभोकै बसेर मर्न खोज्ने त अचेल दुई थाल भात ठोक्छ । खूब प्रसन्न रहन्छ ।"

मैले भनें "ईश्वरको कृपा भए के हुँदैन, विक्षिप्त सद्दे हुन्छ– पङ्गुलङ्घयते गिरिम् ।"

# रिक्सा तान्ने

मगरटोलमा घाम झुल्क्यो । धनवीर आलेटाले गरेर पाखीमा गुटुमुटिइरहेछ । एकचोटि यसो दुई हात टेकेर घिच्रो तानेर आफ्नो छाप्रोको प्रवेशद्वारबाट देखा पर्नेसम्म दुनियाँलाई निरीक्षण गरेर फेरि सुत्यो । उठेर पो के गर्नु ? काम केही भए पो जाँगर देखाउनु ? हिजोदेखि पेटमा अन्नको एक गेडा परेको छैन, खाली पेटमा हावाले ठाउँ पाएर गड्याङ्गुडुङ उपद्रव मात्र गरिरहेछ । पेटलाई थिचेर कुकुर गुँडुल्किएजस्तो तीन सैली घाम आउन्जेलसम्म धनवीर सुतिरहेछ । त्यसको कालो कुकुर छेवैमा धेरै बेरसम्म बसिरह्यो । खान पाइने केही सम्भावना नदेखेर आफ्नो उपाय गर्न हिंड्यो । धनवीरले यसो फेरि मुण्टो पाखीबाट झिकेर हेऱ्यो, त्यसको कुकुर बाहिर केमा हो कुन्नि यतुनो गाडिरहेको थियो । धनवीरलाई ईर्ष्यामिश्रित क्रोध आयो, जुर्मुरिँदै उठी यताउति खोजी केही नपाएर आफ्नो बाँसुरी टिपेर झटारो हान्यो । कुकुर तर्सेर भाग्यो ।

एकछिन धुमधुमती बसिरह्यो । पेटमा लागछाड़ पीडा हुँदैछ । भएन माग्न हिंड्नु पऱ्यो । धनवीर आड तान्दै उभियो । बाहिर त्यसको कुकुर डरले एउटा कुनामा बसिरहेको थियो । धनवीरले

पुच्कारेर डाकेर भन्यो "लौ जाऊँ माग्न । तँलाई त के ? जतातती मोजैमोज छ । म पो भोकले बिरामी परुँलाजस्तो भएको छु । कुकुर जुनि पनि मान्छेको जुनिभन्दा असलै छ । एक पेटको लागि उसलाई पीर छैन ।"

कुकुर पुच्छर हल्लाई-हल्लाई धनवीरको कुरा सुनिरहेको थियो । अगाडि बढेर धनवीरले फ्याँकेको बाँसुरीलाई टिप्यो र तिघ्रामा त्यसको धूलो पुछ्यो र थाल्यो बजाउन ।

माग्न त सजिलो रहेछ । बिहानभरि माग्दा पेट भर्ने अन्न पाइँदो रहेछ । एउटा बाहुनकहाँ श्राद्ध थियो । तिनकहाँ उब्रेको खानेकुरो एउटा टपरीमा सबै खन्याएर त्यसको सामुन्ने वैरिदिए । खीर त त्यही दुईचार गाँसमा सिद्ध्यायो, अलिकति कुकुरलाई पनि दियो । फुरौला बडो सावधानीसँग लँगौटीको फुर्कोमा बाँध्न थाल्यो, तर त्यसमा सबै फुरौला नअटाएकोले इस्कोट फुकालेर त्यसमा बाँध्यो र टपरीलाई अगाडिको दुई गोडाले थिचेर चाटिरहेको कुकुरलाई हकाऱ्यो "लौ हिँड्, जाऊँ । कस्तो लोभी कुकुरको जात ! कति खान नपाएको जस्तो गरेर चाटिरहिछस् । हिंड् जाऊँ धनमाया कहाँ ।"

कुकुर अटेरी भएर उसले अह्राएको सुनेको नसुनेकोजस्तो गरेर टपरी चाटिरहेको देख्ता लोभी कुकुरमाथि रीस उठेर एक लात्ती हान्यो । कुकुर क्वाइँ क्वाइँ कराउँदै भाग्यो । एक छिनपछि बाटामा फेरि धनवीरका पछिपछि हिंड्न थाल्यो ।

धनमायाको छाप्रोनेर आएर धनवीर करायो "धनमाया ।" धनमाया भित्रबाट बाहिर निस्की । धनवीरको हातमा पोको देखेर हाम्फाल्दै त्यो भएनेर आई । धनवीरले बडो गर्वसँग इस्कोटमा बाँधेर राखेको फुरौला भूइँमा थुपाऱ्यो ।

"यो कहाँबाट आयो ?" धनमायाले सोधी । "एउटा बाहुनकहाँ माग्न गएको थिएँ, त्यहीं पाएको" धनवीरले उत्तर दियो । अनुहार बिगारेर बडो तिरस्कारले धनमायाले भनी "छि म कसैको जूठो खान्न । कसकसको जूठो बोकेर लिएर आएछ । फेरि तँ मगन्ते भइस् ?"

त्यति भनेर फनक्क फर्केर ऊ गई । छाप्रोबाट एउटा अर्को मगर निस्केर यो तमाशा हेरिरहेको थियो । फर्केर आएकी धनमायाको कम्मरमा आफ्नो हात बेरेर त्यो भित्र पस्यो । धनवीर एकछिन टोह्लाएर यो दृश्य हेरिरह्यो । पछि छाप्रोमा हाँसेको, जिस्केको शब्द सुन्यो । त्यो भुतुक्क भयो । बिस्तारै फुरौला टिपेर आफ्नो घरतिर लाग्यो ।

आफ्नो छाप्रोभित्र पस्नासाथ उसले सबभन्दा पहिलो काम फुरौलाको बुजो हाल्न थाल्यो– "मोरी, जूठो खान्न रे । त्यसले कसको जूठो खाएकी छैन, रण्डी........!" भुतभुताउँदै त्यो फुरौला खान थाल्यो । त्यसको कुकुर त्यहींनेर बसेर फुरौलातिर दृष्टि गाडिरहेको थियो । यो देखेर धनवीरको कन्सिरी तात्यो । "लोभी, टपरीभरि खाएर अझै यसको पेट भरेको छैन । यसो केही खान थाल्यो भने दुलुदुलु हेरेर चोखे लाइदिन्छ, मोरा ।" यति भनेर त्यसलाई हान्न हात उचाल्यो । कुकुर त्यहाँबाट फुत्त भाग्यो र दिनभरि फेरि देखा परेन ।

फुरौला खाएर धनवीर फेरि काम्लो ओढेर सुत्यो । धनमायादेखि रिसाएको हुँदा त्यो शान्तिले निदाउन पनि सकेन । कहिले त क्रोधको वेगले त्यो काम्न थाल्यो । साँझतिर पनि उसको क्रोध मरिसकेको थिएन । छाप्रोबाट निस्केर दैलोनेर चौरैमा बसेर टोह्लाएर उत्तरतिरको पहाडलाई एकटकले हेरिरहेको थियो । त्यसै बखतमा धनमाया र त्यो अघिको मगर उताबाट आए । त्यो बसेनेर आइपुग्नासाथ दुवैको दृष्टि त्योमाथि पऱ्यो । दुवैले मुखामुख गरेर मुसुक्क हाँसे । धनवीरले दाह्रा किटेर भन्यो "मोरी ।"

धनमायाले कराएर सोधी– "के भनिस् ?" धनवीर केही नभनी जुरुक्क उठ्यो र धनमायाको चुल्ठो समातेर पटापट कुट्न थाल्यो । त्यो अर्को मगरले पछिल्तिरबाट धनवीरका सम्मरमा साह्रै बलले लात्ती हान्यो । धनवीरको कम्मर भाँच्चिएलाजस्तो भयो । त्यो उभिन नसकेर थुचुक्क बस्यो । त्यै मौकामा धनमाया उठेर थुक्दै त्यसलाई हान्न थाली । त्यो अर्को मगरले पनि दुईतीन लात्ती हिर्कायो ।

धेरै रात आउञ्जेलसम्म धनवीर त्यही चौरमा पछारिरह्यो । सारा शरीरमा पीडा थियो । उठ्न सक्ने शक्ति उसमा थिएन । कम्मर अलिकति हल्लँदा पनि चटक चटक गरेर दुख्न थाल्यो । त्यो विस्तारै विस्तारै घस्रँदै छाप्रोभित्र आएर सुत्यो । दुई दिन त्यो कतै निस्केन । हनहनी जरो आयो, कम्मरको पीडा हिजोभन्दा आज झन् बढ्यो । तर पर्सिपल्ट फेरि त्यो माग्न भनेर विस्तारै छाप्रोबाट निस्क्यो । आज बाँसुरी लिन बिर्स्यो । कुकुर चाहिने परिस्थितिको मुताबिक उत्साह नदेखाई त्यो सँगसँगै हिंडीरहेको थियो ।

त्यो एउटा ठूलो घरको ढोकामा उभिएर करायो "मालिक, खान देऊ, धर्म हुन्छ ।"

एउटा युवकले झ्यालबाट टाउको झिकेर भन्यो "हेर त नकच्चरो भूसतिघ्रे छ, मागी मागी हिंड्छ काम गर्न जाँगर छैन र माग्न हिंडेको ।"

धनवीर क्रोधलाई काबूमा राखेर छलफल गर्न तैयार भयो "हजूर, काम पाए गर्नु कि त्यसै : कहाँ काम पाइन्छ ?" त्यो युवकलाई अप्ठ्यारो पार्न सोध्यो "के हजूर, मलाई काम दिनुहुन्छ ?"

त्यतिबेला युवकको बूढा बाबुले आफ्नो मुण्टो देखाएर भन्यो "हाम्रो रिक्सा तान्ने भए वस् ।"

धनवीरले आत्माभिमानसँग भन्यो "हुन्छ ।" बूढाले माथिबाट हातले देखेर भने "ऊ त्यो छिंडीको कोठामा रिक्सा राखेको छ, त्यहीं तँ बसेस्, त्यो तेरो कोठा भयो । लौ लौ त्यो भुस्याहा कुकुरलाई कहाँ लैजान थालेको ?"

धनवीरले बिनीत भएर प्रार्थना गऱ्यो "हजुर, यो मेरो साथी हो । गरीब छँदा छाप्रोमा वास हुँदा उसले मलाई छोडेन भने आज म यत्रो ठूलो घरमा बस्न आउँदा म यसलाई कसरी छोडूँ ?"

बूढाले अलिल पग्लेर सोधे "गुहु त खाँदैन ?" धनवीरले उत्तर दियो "मैले आफूले खाएको कुरो खुवाई यसलाई पालेको छु ।"

"लौ त भयो, तर यसलाई छाडा नगरेस् । माथिमाथि चहार्ने नगरोस् । माथि उक्ल्यो भने राम्रो हुनेछैन । तेरा मालहरू लिएर आइज । तँ आजदेखि भर्ना भइस् । तेरो नाउँ के रे ?"

"धनवीर ।"

"लौ धने, दुई रुपियाँ तेरो दर्माहा भयो । खान-लाउन पाउँछस् ।"

"तेरो कामचाहिने म वाहिर जाने वखतमा रिक्सा तान्नुपर्छ ।"

"हजूर, खान देऊ न त । दुई दिनदेखि भोकै छु ।"

त्यो दिन पेटभरि धनवीरले खान पायो । आफ्नो छाप्रोबाट वाँसुरी र काम्लो वोकेर निस्कँदा त्यसको मन त्यसै अमिलो भयो । किन हो कुन्नि हृदयमा कसैले मुड्कीले हानेजस्तो लाग्यो । वाटामा त्यसलाई चिन्नेले सोधे "कहाँ हिँडिस् धने ?" "एक ठाउँमा काम पाएको छु" उसले छोटकरीमा उत्तर दियो ।

"हो हो, खूप जानिछस् । काम गर्नुपर्छ" भन्दै तिनीहरू आफ्नो वाटो लागे ।

नयाँ घरभित्र धनवीर पस्यो । छिंडीको कोठामा एउटा कुनामा रिक्सा राखेको थियो, धनेले अर्को कुनामा काम्लो थन्क्यायो र गएर रिक्सालाई छोईछोई निरीक्षण गर्न थाल्यो । त्यसको कुकुर नयाँ ठाउँदेखि आत्तिएर एकछिन पनि मालिकलाई छोड्ने साहस गर्दैन ।

भोलिदेखि त्यो वूढो मालिकलाई तान्दै शहरको सडकमा दगुर्न थाल्यो । तर छिटै उसको दम फुल्न लाग्यो । वूढाले भने "खोइ, तँ सक्तैनस् क्या रे, कति छिटै स्वाँ स्वाँ गर्न थाल्छस् । पहिलेको धर्मे त महाराजगञ्ज पुऱ्याउँदा पनि टाठोको टाठै रहन्थ्यो ।"

धनवीरलाई उसको वलको विषयमा लाञ्छना गरेको देख्ता दिक्क लाग्यो "हजूर, म यता विरामी थिएँ, नत्र यति जावो पाङ्ग्रा तान्न म थाक्थें ?"

यति भनेर दगुर्न थाल्यो । भित्र ताकत एकदम शून्य भैसकेको भए तापनि आत्माभिमानले त्यो दगुरिरहेको थियो । वूढाले रिक्सा थाम्न

भने । रिक्साबाट ओर्लेर उनी एउटा दरबारजत्रो घरभित्र पसे । धनवीर खोक्दै पसीना पुछ्न थाल्यो । मुटु फुट्लाजस्तो भयो । त्यो थचक्क बसेर निकै बेर सम्म खोकिरह्यो ।

एक छिनपछि बूढा मालिकलाई तान्दै घर फर्क्यो । धनवीरलाई फर्केर आएको देखेर त्यसको कुकुर दगुर्दै गोडामा छाँद हाल्दै लुटुपुटु गर्न थाल्यो । बूढाले रिक्साबाट ओर्ह्लँदै भने "यसलाई बाँधेर राख्ने गरेस् । कस्तो छुकछुक गर्दोरहेछ ।"

साँझमा एउटा पित्तले थालमा भातदाल ल्याएर नोकरले त्यसको अघिल्तिर राखेर भन्यो "यो थाल तेरो भयो । यसैमा विहानबेलुका भात लिन जानू । धुनूवर्नू र आफैसँग राख्नू ।"

धनवीर र त्यसको कुकुर सँगै बसेर खान थाले । त्यो दिन त्यसको वित्यो ।

राती पराल ओछ्याएर काम्लो ओढेर थाकेको धनवीर भुसुक्क निदायो । राती एकदुईचोटि कराउँदै उठ्थ्यो "इस् ठूलो घर भन्नु मात्रै, लाम्खुट्टे अग्घोर लाग्दो रहेछ ।" फेरि अर्कोतिर कोल्टे परेर निदाउँथ्यो ।

भोलिपल्टदेखि रिक्सा तान्ने काम उति सारो कठिन लागेन । तर दम भने फुल्थ्यो औ खोकी पनि लाग्थ्यो । कस्तो निर्धो गराएछ दुई दिनको जरोले ।

एक दिन वूढा मालिक रिसाउँदै फलाक्दै तल झरे । कुकुर दगुर्दै धनवीरनेर आएर एउटा कुनामा बस्यो । बूढा पनि धनवीरनेर आएर चिच्याएर भन्न थाले "धने, तँलाई भनेको होइन यसलाई बाँधेर राख्नू भने, किन छाडा छोडिस् ? माथि पूजाकोठामा पसेर नैवेद्य चाटिरहेको थियो । यसो गर्ने हो भने मेरो घरबाट निस्की, जा रिक्सा तान्ने हामी थुप्रै पाउँछौं ।"

धनवीरले प्रार्थनाको स्वरमा भन्यो– "यो मोराले मलाई कति दुःख दिने हो ? यसलाई बाँधेर नै राखेको थिएँ, कसरी फुत्केर भागेछ ? अबदेखि कहिले पनि त्यो माथि उक्लने छैन । आजलाई माफ पाऊँ ।"

बूढा मालिक फतफताउँदै गए । धनवीरले गएर डरले एउटा कुनामा बसिरहेको कुकुरलाई लात्तीले हान्यो । "कतिचोटि भनें माथि नगएस्, मान्नु छैन । खा, लौ खा" भन्दै लात्तीमाथि लात्तीको प्रहार गर्न थाल्यो ।

कुकुर क्वाईं क्वाईं गर्दै आफ्नो कसूरलाई स्वीकार गर्दै सब सहिरह्यो । पिटिसकेर धनवीर आफ्नू परालमा गएर सुत्यो । एक छिनपछि उठेर थालमा विहानदेखि नखाई राखेको मुछेको भात लगेर कुकुरलाई खान दियो । फेरि मायाले सुमसुम्याउँदै भन्न लाग्यो "नजाने गर् न माथि । तँलाई मन पराउँदैनन् । के गर्न माथि धाइरहन्छस् ?"

काम गरेको धेरै दिन भएको थिएन । मालिकको वारीको ढिस्कोमा छिमेकका दुईतीन केटा आएर धनवीरलाई जिस्क्याउन थाले– "हेर घोडा दाइ । ए घोडा, हिर्नाहिना त ।"

आफूलाई घोडा भनेको सुन्दा धनवीरलाई आफ्नो वडो अपमान गरेको जस्तो लाग्यो । उफँदै ती ठिटाहरू खेद्न थाल्यो । एउटा भाग्न सकेन, त्यसलाई समातेर एकदुई लपटा दियो– "अझ भन् घोडा ? मान्छेलाई पशु वनाउनु लौ खा ।" प्याँ गरेर वूढो मालिककहाँ गएर त्यसले कुरा लायो । "वडो वाठो भएको धने चोर" भन्दै तिनले धनवीरलाई हप्काए ।

धनवीरले भन्यो– "हजूर, तिनीहरू मलाई जिस्क्याइरहन्छन् । घोडा भन्छन् । म मानिसको जुनिमा जन्मेको मलाई पशु तुल्याउँछन् कस्तो निसाफ ?"

वूढा मालिकले यस्तो ठाडो जवाव दिएको सुनेर रातो आँखा पारेर भने "धेरै वढेर झन् वोल्छस् ? तँ तिनीहरूलाई हात छोड्ने को होस् ? वुझिस् अव यस्तो सुनें भने निको हुने छैन ।"

धनवीरले यो अन्यायलाई तल मुण्टो गाडेर सहन गर्‍यो ।

भोलिपल्टदेखि ती वूढाको पुठ पाएका ठिटाहरू झन् मच्चीमच्ची त्यसलाई जिस्क्याउन थाले "ए दुई खुट्टे घोडा, लौ त कसरी हिर्नाहिनाउँछस् ? हामी पनि सुनौं त ।"

धनवीर पहिले त रीसलाई काबूमा राखेर एकातिर हिंड्थ्यो, पछि विस्तार विस्तार किच्च दाँत देखाएर हाँस्न थाल्यो । हुँदाहुँदा घोडा हिंडेको भाव लाउँदा यताउँति उफ्रन थाल्यो ।

चार हात खुट्टा टेकेर हिंडी हिंडी घोडा हिंडेको भाव लाउँदै भन्थ्यो "हामी पहिले यसरी हिंड्थ्यौं । यो, यसरी घाँसमा चर्थ्यौं । ही ही ही ही ।"

ती केटाहरू अट्टहास गरेर थपडी मार्दै हाँस्थे । उनीहरूका आनन्दले उत्साहित हुँदै त्यो एउटा केटालाई आफ्नो पिठ्यूँमा चढाएर वर्लुक्क वुर्लुक्क वारीमा कुदाउँथ्यो ।

यसै गरीकन धेरै दिन त्यसले काम गऱ्यो । बीचबीचमा दुईतीन चोटि जरो आएर सुत्ने तर काम भने शरीर पटक्क नसक्ने भए मात्र गर्दैनथ्यो । नत्र सकी-नसकी आफ्नो रिक्सा तान्ने काम गर्थ्यो । तैपनि मालिकहरू सन्तुष्ट थिएनन् । "यो सधैं विरामी परेर सुत्नेलाई कसले खुवाई खुवाई राख्न सक्छ र ? मागेर खाने बानी भएको, कहाँ काम गरेर टिक्न सक्थ्यो ? काम छल्नलाई जरो आयो भनेर सुत्छ ।"

एक दिन बिहान कहाँ जानुपऱ्यो कुन्नि, बूढा मालिक लुगा लाएर तल झरे । धनवीर अझै उठेको थिएन । "पाटें" तिनले कराएर उसलाई उठाए । हँ हँ गर्दै त्यो उठेर बस्यो र भन्न थाल्यो "हजूर, जरोले मलाई साह्रै दुःख दियो । आज रिक्सा तान्न सक्तिनँ ।"

बूढा मालिकलाई त्यसले ठगेको हो भन्ने शङ्का गर्ने ठाउँ नै थिएन । तिनले तीखो स्वरमा भने "तँलाई पूजा गर्न राखेको होइन । जव मन लाग्यो सुत्यो, जव मन लाग्यो उठ्यो । यसो गर्न यहाँ पाईंदैन । काम गर्न सक्तैनस् भने हामी अर्को राख्छौं, वुझिस् ?"

धनवीरले उत्तर दियो "जीउले भ्याए जति चाकरी गर्दैछु, नसकेको के लाग्यो ? हजूरलाई पनि काम अड्कने । म आजदेखि जान्छु । मभन्दा वलियोले राम्रो काम दिन सक्ला ।"

उत्तिखेर वाह्र रुपियाँ उसको ६ महीनाको तलव दिएर बूढाले धनवीरलाई घर छोड्न भने ।

धनवीरले रुपियाँ टिप्यो । बाँसुरी टिपेर काम्लोमा गुटुमुटु पारेर त्यो घरवाट वाहिर निस्क्यो । कुकुर त्यसको पछिपछि थियो ।

त्यो सोझै धनमायाको छाप्रोतिर गयो । एक छिन वाहिर दूवोमा वसेर सुस्तायो र कराएर डाक्यो "धनमाया ।"

धनमायाले दैलोमा आएर सोधी "को हो ?"

"म धनवीर, रुपियाँ कमाएर आएको छु ।"

धनमायाले त्यसको नजीकै गएर सोधी "यतिका दिन तिमी कहाँ थियौ ? रिक्सा तान्थ्यौ रे । मैले त तिमीले रिक्सा तानेको एकचोटि पनि देखिनँ ।"

धनवीरले सुनेको नसुन्यै गरेर भन्यो "यो रुपियाँ कमाएर ल्याएको ।"

धनमाया भन्दै गई "तिमी किन यति दुव्ला ? काम्लो किन ओढेको ? जरो आएको छ ? तिम्रो हाड-छाला मात्र वाँकी छ ।"

धनवीरले एकोहोरो भनिरह्यो "यो रुपियाँ तिमीलाई भनेर कमाएको ।" त्यति भनेर वाह्र रुपियाँ धनमायाको गोडैनेर राखेर आफ्नो छाप्रोतिर लाग्यो ।

त्यसको छाप्रो त नाममात्रको वाँकी रहेको थियो । त्यसवाट लिएर जान सकिने टाटी, खाँवा सव मान्छेहरूले धनवीर आउँदैन भनेर उखलेर लगिसकेका थिए । दुईतीन खाँवाका भरले मात्र माथिको छाना अडिरहेको थियो । आफ्नो छाप्रोभित्र पस्ता त्यहाँभित्र सुतिरहेको घाउले कुहेको कुकुरले ङुर्र ङुर्र दुईतीन चोटि गर्‍यो । धनवीर त्यसको घुर्कीको केही वास्ता नगरेर भित्र पस्यो । यस्तो नीडर भएर धनवीर भित्र पसेको देख्ता त्यो कुकुर ठाउँ छोड्ने निश्चय गरी सारा वातावरण दुर्गन्धित पारेर वाहिर निस्क्यो ।

धनवीरलाई यतिको हिंडाइ असह्य भयो । त्यो बुङ्ग पछारियो । खोकी लाग्यो । एकचोटि खोक्ता ह्वाल्ल रगत वान्ता भयो । फेरि लट्ठ भएर चिसो भूइँमा निदायो ।

राती एकचोटि फेरि खोकी लाग्यो । छादेको रगतको भल बग्यो । त्यसको कुकुर क्वाँ क्वाँ गरेर रुन थाल्यो । कुकुर रोएको सुनेर छिमेकका सुन्ने मानिसहरूले हत्केलाले कान थुनेर सराप्न थाले "कस्तो अलच्छिना कुकुर रहेछ ।"

# मधेसतिर

सुनकोशी र तामाकोशीको सङ्गममा विहान भयो । सुनकोशी उत्तरबाट प्रशस्त वेगसँग बगेर आउँथ्यो, पूर्वतिरबाट तामाकोशी धागोजस्तो पातलो धारा लिएर आउँथ्यो र सुनकोशीमा मिसिन्थ्यो । सुनकोशीलाई तर्न सक्ने कोही कोही मात्र होलान् तर तामाकोशीलाई दह्रो तिघ्रा भएको जसले पनि तर्न सक्थ्यो । यी दुवै नदीको किनारमा दुवैतिर हरियो-परियो केही उम्रेको थिएन । यिनको सम्मानार्थ रूख पातहरू ठाडै उभिएका जस्ता थिए ।

सूर्यको प्रथम किरण पर्नासाथ पृथ्वीका पाप्रा उप्केजस्तो गरेर नदीका किनारमा घुम्लुङ्ग परेर सुतेका चार पाँच जना उठे । सबैको मनमा उठ्नासाथ प्रश्न उठ्यो पेट कसरी भर्ने ? एउटाले अर्कोको मनोभाव बुझ्केकोजस्तो गरेर सबै मुखामुख गर्न लागे । विधवाको दृष्टि गोरेमाथि थियो । विधवाले सबैलाई सम्बोधन गरेर भनिन् "होइन, तिमीहरू घरबाट हिंड्दा पेट भर्न के उपाय गरेर हिंडेका थियौ ? के खाउँला भनी ठानेका थियौ ?" सबै जना विधावाको कुराले विस्मित भए । भोटेले भन्यो "मेरो त घरै छैन ।" बूढोले भन्यो "मेरो त थियो, तर अव म पनि घरद्वार नभएको छु । तर नानी, तिम्रो भए किन यहाँ आएकी त ?"

घरद्वार नभएका यी चार जना माग्ने भनूँ वा कुल्ली भनूँ काम पाए कुल्ली नत्र माग्नेका माझमा घरद्वार भएकी विधवा कागको हूलमा हाँसिनी थिइन् । तिनले अन्नपूर्णा झैं झट्ट आफ्नो पोकोबाट चिउरा

झिकिन् र भाग लाउन थालिन् र सबैको चिउरामाथि थप थप चाकूका डल्ला राखिन् । सबैको आँखामा अकस्मात् तेज आयो र सबैको हृदयमा विधवाप्रति महान् आदरको भाव उत्पन्न भयो । गोरेलाई आफ्नू भागबाट चिउरा थपिदिंदै भनिन् "तिमी जवान छौ । तिमीलाई अरूभन्दा बढ्ता भोक लाग्दो हो ।" फेरि सबैलाई सम्बोधन गरेर भनिन् "मधेसतिर हिंडेकी, पोइ छैनन् । सासू ससुरा फुटेको आँखाले हेर्दैनन् । देवर रुखो माया गर्थ्यो तर पोइ नभएको घरमा टिक्न सकिनँ ।"

यो वाक्यले ती चारैजनाको हृदयमा खूब प्रभाव पार्‍यो । खान पाउने ठाउँ पोइ छैन भन्दैमा लत्याएर हिंड्नु लरतरो काम होइन । तिनीहरू ती विधवालाई झन् मान गर्न थाले ।

उनले सोधिन् "तिमीहरू कहाँ हिंडेका नि ? तिमीहरूले त राती पनि केही खाएको देखिनँ, त्यसै सुत्यौ । मेरो पनि कोही साथी नभएकोले तिमीहरूनेर आएर सुतें । रातभरी तिमीहरूको माया लागिरह्‍यो ।"

भोटेले बडो आश्चर्य मानी सोध्यो "तपाईंलाई हाम्रो किन माया लाग्यो ? हामी तपाईंको पोइ होइनौं, छोरा होइनौं, बाबु होइनौं ।"

विधवाले भनिन् "तिमीहरू मान्छे त हौ ।"

हिजो दिनभरि नखाएको पेटमा चिउराका कणहरू पर्दा सबै फुर्तिला भएर उत्साहसँग कराई कुरा गर्न थाले । बूढोले भन्यो "नानी, हामीहरू चारजनाको केही नाता छैन । कसैको घर छैन । यता काम पाइन छाड्यो । कतै काम पाइन्छ कि भनेर हिंडेको, अहिले तिम्रा कुराले मधेस जानुपर्नेजस्तो लाग्यो । के भन्छौ साथी हो, मधेस झर्ने ? मधेसमा पेटभरि खान पाइन्छ । म एकचोटि भारी बोकेर मधेर गएको थिएँ ।"

उत्लिखेर सबैले मधेस लाग्ने निश्चय गरे र पाँचैजना, चार लोग्ने मानिस एक स्वास्नीमानिस दक्षिणको बाटो लागे । बूढो आफ्नू बितेको जीवनका घटनाहरूलाई भन्थ्यो । उसले एकचोटि निकै पैसा कमायो, सत्र रोपनी खेती गर्थ्यो, पछि त्यसै बिग्रीबिग्री आयो । त्यस बेला त्यो जवान थियो, निधारमा नाम्लो हाली भरियाको काम गरी पेट

भर्न सक्थ्यो । अब त त्यो पनि सामर्थ्य छैन । नत्र यो बूढो यसै भोकभोकै हल्लिरहन्थ्यो र ? अब मर्ने बखत पनि भयो । पेटको ज्वाला खप्न नसकेर मात्र यताउति हिंड्नुपरेको ।

विधवाले भनिन् "मेरो त मधेसमा गएर राम्ररी घरबार गरेर वस्ने इच्छा छ । सानो खेतीबारी गर्‍यो । वहाँ खेती गर्न सजिलो छ रे । जग्गा पनि त्यसै पाइन्छ रे । यहाँ त सासू ससुराका कचकचले अड्नै सकिएन । फेरि पोइ मरेको ठाउँमा त्यसै उच्चाट लागेर आउने ।"

भोटे र धने यिनीहरूको कुरा चाख मानेर सुनिरहेका थिए तर आफू केही बोल्दैनथे । गोरे थाकेजस्तो भएको थियो, त्यो सबभन्दा पछि गोडा घसारी हिंडीरहेको थियो । विधवा गोरेको निम्ति पर्खिन् । उनी थामिएपछि सबै थामिए । गोरे नजीकै आएपछि विधवाले भनिन् "के थाक्यौ गोरे । घाम पनि अग्घोर छ । तिम्रो टाउको तात्यो होला, लौ लेऊ, यो कपडा टाउकोमा राख ।" उनले आफ्नो टाउकोमा राखेको सेतो लुगा झिकेर गोरेको टाउकामा राखिदिइन् ।

फेरि सबै जना हिंड्न थाले । त्यो बूढो भन्नु मात्र थियो, त्यो सबभन्दा अघिअघि लमकलमक गरेर हिंड्थ्यो । भोटे र धने त्यसको दवैतर्फ त्यसका कुरा सुनीसुनी हिंडीरहेका थिए । आफ्नो पछिल्लो जीवनको घटनालाई त्यसरी रुचाएर तिनीहरूले सुनेको देख्ता बूढो झन् सुरिएर भएनभएको कुरा गर्न थाल्यो । भोटे र धने पक्क परेर सुनिरहेका थिए । भित्रभित्र तिनहिरू बूढाको आदर गर्थे ।

विधवा र गोरे पछिपछि विस्तार विस्तार आइरहेका थिए । गोरेको उमेर पच्चीस वर्षको हुँदो हो, विधवाको तीस । गोरे धेरै नबोल्ने र लाज मान्ने स्वभावको थियो । त्यसको खपटे गाला धेरै दिनको परिश्रमले झन् तल भासिएको थियो, आँखा ज्योतिहीन थिए । विधवाले सोधिन् "तिमी मधेस गएर के गर्छौ ?"

गोरेले भन्यो– "कुन्नि ।"

विधवाले भनिन्– "के तिमी घरवार गर्दैनौ ? खेतीबारी गरी वस्न मन छैन ?"

गोरेले भन्यो– "पैसा खोइ नि ?"

विधवाले भनिन्– "मधेसमा खेती गर्न त्यसै पाइन्छ । वहाँ खेत सित्तैं पाइन्छ । तिम्रो उमेर के भयो होला र ? घरद्वार गर । स्वास्नी पाल, छोराछोरी पाल । यस्तो उरण्ठ्याउलो भएर कति दिन बिताउँछौ ?"

विधवाले फेरि एक्कासि प्रश्न गरिन्– "तिमीलाई स्वास्नीमानिस मन पर्दैनन् ?" गोरेले टाउको उठाएर विधवातिर तीव्र दृष्टिले हेऱ्यो र भन्यो– "किन मन पर्दैनन् ?"

विधवाले भन्न थालिन् "म मधेस गएर खेतीबारी गर्छु । घरबार गर्छु , तर स्वास्नीमान्छेले मात्र घर बनाउन सक्दैनन्, लोग्नेमानिस पनि चाहिन्छ । मेरो मनमा त्यसै यो विचार आयो "किन हामी दुईजना मिलेर घर नचलाऔं ?"

गोरेले विस्मयको दृष्टिले विधवालाई हेऱ्यो । विधवाले अलिक अप्रतिभ भएर भनिन् "के म तिम्रो लायक छैन र ? मेरो उमेर धेरै भएर के भयो त ? मैले आफ्नो शरीर जोगाएर राखेकी छु । मेरो लोग्ने मरेदेखि मलाई कसैले छुन पाएको छैन । मेरो सन्तान पनि केही भएन, त्यसो हुनाले शरीर बिग्रन पाएन ।" गोरेले चकित भै विधवालाई हेरिरह्यो । विधवाले भनिन् "गोरे, मेरो धेरै दिनदेखि आफ्नो घर बनाएर बस्ने इच्छा छ । पोइ चाँडै मरिदिए । आफ्नो इच्छा मुटुमै सुकेर जालाजस्तो भयो । म के छोराछोरी पाउन सक्तिनँ र ? खोइ मेरा छोराछोरी ? खोइ मेरो आफ्नो घर । खोइ मेरो आफ्नो मान्छे ?

विधवाको मुख अकस्मात् रुञ्चेजस्तो भयो । उनको मुख रातो भयो । मुण्टो तल गाडेर नबोली हिंड्न थालिन् । धेरै बेरसम्म उनीहरू नबोली हिंडिरहे । साँझ पर्ने वखत हुन थाल्यो । विधवाले निस्तब्धतालाई भङ्ग गरेर भनिन्– "गोरे मसँग अलिक गहना पनि छ, रुपियाँ पनि छ, त्यसैले गएर खेती किनौंला, घरद्वार बनाउँला, तिमी मेरो भयौ भने यो सब तिम्रो हुन्छ ।"

अलिक पर बूढो भोटे र धने एउटा ठूलो ढुङ्गामा बसेर तिनीहरूलाई पर्खिरहेका थिए । उनीहरूलाई आएको देखेर टाढैबाट बूढोले भन्यो "अब बस्ने होइन ? खाने के नि ?"

सबैको दृष्टि विधवामाथि पऱ्यो । उनले भनिन् "अलिकता चिउरा बाँचेको छ, पेटभरि नभए तापनि अलि अलि त येग्ला ।" तिनीहरू बसेर चिउरा फाँक्न थाले र आकाशलाई छानो बनाएर गुँडुल्किएर त्यहीं बाटोको छेउमा सुते ।

दिनभरि हिंडेका हुनाले तिनीहरू सुत्न पनि पाएका थिएनन्, भुसुक्क निदाए ।

विहान सूर्यको पहिलो किरणको साथसाथैमा बूढो उठ्यो र खोक्न थाल्यो । सब जना उठे । तर गोरेको पत्ता थिएन । विधवाले आत्तिएर सोधिन् "गोरे खोइ ?"

बूढोले शान्त भएर भन्यो, "गयो होला कतै, अब हामीले हिंडिहाल्नुपर्छ । अहिले खानलाई केही छैन । साँझसम्म त पुग्नुपर्छ । त्यहाँ केही खाने उपाय हुन सक्छ ।"

विधवाको हृदय भारी भयो र उनी बूढो, भोटे र धनेको हृदयहीनता देखेर छक्क परिन् । दुर्दिनको सँगी यसरी अल्पिंदा यिनीहिरूको मनमा अलिकता पनि दुःख नहुनु ? तिनी आफ्नो पोको बटुल्न थालिन् । उनको हृदय धक्क भयो । उनको गहनाको पोको छैन ।

सब जना हिंड्न तयार भए । तर विधवा बसेर पोकाहरू बाँधबुँध मात्र गरिरहेकी थिइन् । त्यो देखेर बूढाले सोध्यो "के गरिरहेको । हिंडिहालौं नत्र साँझसम्म......... पुगिंदैन । भोकै सुत्नु पर्ला ।" विधवाले रुन्चे स्वरले भनिन् "मेरो गहनाको पोको छैन ।"

सब जना छक्क परेर विधवातिर टुलुटुलु हेर्न थाले बूढाले भन्यो– "तिमी गहना-गुरिया लिएर कहाँ हिंडेको त ? लग्यो होला गोरेले । अब चोरिने कुरा चोरिइहाल्यो, रोएर के गर्नु ?" विधवालाई त्यसको कुरा सुनेर रीस उठ्यो । उनले चिच्याएर भनिन्– "चूप लाग बूढा । त्यस गहनाले मैले के के गरुँला भन्ने विचार गरेकी थिएँ, खेती किनुँला, विहा गरुँला, घर जमाउँला, छोरा पाउँला । मेरो सारा आशा नष्ट भयो ।"

यति भनेर डाँको छोडेर रुन लागिन् । बूढो तिनी भएनेर गएर उनको काँधमा हात राखेर भन्न थाल्यो "किन रोएकी नानी ? चोरिने

कुरा चोरियो । मधेसमा केही न केही उपाय भैहाल्छ । तिमीले पोइ पनि पाउँछ्यौ । तिम्रो घर पनि हुन्छ । नआत्तियौ, लौ हिंड ।"

विधवा टोल्हाएर उभिइन् र बूढोको पछिपछि लागेर हिंड्न थालिन् ।

त्यो टाढाको टाकुरामा पुगेर बूढोले बडो उत्साहसँग दक्षिणतिरको आँखाले भ्याउन्जेलसम्मको, ठूलो विस्तीर्ण मैदानलाई देखाएर आफ्ना सायीहरूलाई भन्न थाल्यो– "ऊ त्यही हो मधेस । त्यहीं हाम्रो उद्धार हुन्छ । त्यहीं हामीले अघाउन्जेल खान पाउँछौं ।"

भोटे र धनेको आँखामा उत्साहको आभा दगुर्‍यो । भोकले सुकेको गालामा पनि आनन्दको गुलाफी देखियो । कानसम्म मुखको कुना पुर्‍याएर मुखभरि चाउरी पारेर तिनीहरू हाँसिरहे ।

तर विधवामा उत्साह थिएन । आफ्नो उमेर ढलिसकेको थियो । उनले तिनै गहना र रुपियाँको आकर्षणले कुनै युवकलाई तानेर आफ्नो बनाउने इच्छा गरेकी थिइन् । आफ्नो सानै उमेरदेखिको सपनालाई– आफ्नो सानो घर, छोराछोरी– सफल बनाउने इच्छा गरेकी थिइन् । सब तासको घर झैं भताभूङ्ग भयो । उनले पनि देखासिखी गरेर उत्साहहीन दृष्टिले दक्षिणतिरको मैदानलाई हेरिन् ।



# सिपाही

पहाडको बाटोमा एक्लै हिंड्न निकै गाहारो पर्छ । मलाई दुईतीन दिनका यस्तै बाटो हिंड्नु थियो । तर मैले बाटोमा एउटा सिपाहींलाई फेला पारें, जसले मेरो यात्रा धेरै सुगम पाऱ्यो ।

पहिले उसले मलाई सोध्यो "ए बाबू, तपाई कता हिंडेको ?"

परिचितले बोलाएझैं पछिबाट हकाऱ्यो । मैले फर्केर हेरें । एउटा सिपाही फौजी पोशाक लाएको आफ्नो सानो डेग छिटोछिटो अगाडि बढाउँदै मनेर आइरहेको थियो । फौजी सिपाहीको नृशंसताका सम्बन्धमा मैले धेरै सुनिराखेको थिएँ, त्यसो हुनाले सिपाहीसँग साथ छुटाउन सानो उत्तर "इलाम" दिएर म अगाडि बढें । तर तबसम्म त्यो मनेर आइपुगेको थियो ।

"ओहो !" हाँस्ता सुनको पाताले बाँधेको अगाडिको दाँत प्रकाशमा टल्क्यो– "म पनि उतै जान लागेको छु । आज दिनभरि त साथै हुने भइयो हगि दाइ ?" बडो लापरवाहीसँग त्यसले भन्यो ।

कालो कोट, फौजी टोपी, खाकी प्यान्ट । त्यसको कालो कोटको जेबबाट एउटा सस्तो फाउन्टेनपेनको क्लिप पनि टल्किरहेको थियो । क्वीन एक घडी पनि त्यसको नाडीमा बाँधिएको थियो, जो उसले हात उठाउँदा बोल्दाखेरि बीचबीचमा हात उठाउने उसको बानी

थियो– देखिन्थ्यो । एउटा ठूलो रातो रुमाल आफ्नो घाँटीमा त्यसले बेरिराखेको थियो ।

"म त सिपाही हुँ, तर तपाईं ईश्वरले झूटो नबोलाए तपाईं विद्यार्थी हुनुहुन्छ। होइन के ?"

मैले हाँसेर स्वीकार गरें ।

"कुरा यो हो, को कस्तो हो, के काम गर्छ, म उसको पहिरनबाट, उसको कुराबाट भन्न सक्छु । तपाईंको रगत खाने, आजसम्म मैले धोखा खाएको छैन, कमसे कम यस विषयमा । म पढ्न-लेख्न जान्दिनँ अँ, आफ्नो दस्खत महीनावारी लिने बखतमा गर्न सक्छु र रामायणसम्म बाँच्छु । मैले यति पढ्न पनि ब्यारेकमै सिकेको, तर पढ्नमा नै लागेको भए तपाईंजस्तै दुब्लो-पातलो पहेंलो हुने थिएँ ?"

त्यसका कुरामा अब मैले आनन्द पाउन थालें । त्यो बाटामा सबैसित परिचितजस्तै कुरा गर्थ्यो "कता हिंडेको ?"

मान्छेहरू त्यसको फौजी आकृतिका डरले केही भन्न सक्तैनथे । कुनै छिप्पिएकी उमेरकी स्वास्नीमानिस भेटिएमा त्यो उसलाई सासूको उपाधि दिन्थ्यो र ती सासूका छोरीहरूको स्वास्थ्यका विषयमा सोध्थ्यो– "तपाईंकी सानी छोरी कस्ती छ ? भन्नुहवस् न, मेरो मन परेकी सासू ।"

त्यो मेरो विषयमा जान्ने इच्छा राख्तैनथ्यो । आफ्नो कुरा भन्नलाई नै फुर्सत पाउँदैनथ्यो, मेरो विषयमा के खोजीनिती गरोस् ।

"म क्वेटा छाउनीमा छु । वहाँ गएको धेरै दिन भयो । मेरी एउटी दुलही पनि छ तर यतै पहाडतिर । त्यो रोगी र बेकामकी छ तैपनि दुइवटा छोरा भइहाले । म घर नगएको धेरै दिन भयो, जाने इच्छा पनि छैन । मेरी दुलही निश्चय नै अर्कासित गइसकेकी होली । छोराहरू पनि गुण्डा भइसके होलान् । अँ, सानो चाहिने छोरा चलाकजस्तो थियो, त्यसलाई पढाउने मेरो ठूलो खायस थियो, तर को दुःख बेसाओस् । मेरा बाबुले मलाई पढाएनन्, म मजासँग छु । क्वेटामा नै एउटी दुलही खोजिहालेको छु । जहाँ बसे पनि मन लाग्ने कुरा हुनुपर्छ ।"

सिपाहीको कुरा सुन्दा निकै आनन्द पाइँदो रहेछ किनभने त्यो केही कुरा पनि नलुकाई खुलासा भन्दछ । किन कुरा लुकाओस् र ?

मैले गम्भीर विद्यार्थीभैँ सोधेँ "तर तिमीहरूको सैनिक जीवन कस्तो हुन्छ नि ?"

"हहह........... तपाईले पनि के सोधेको ? तपाईंको मासु खाने बडो मजा हुन्छ । तपाईंहरूलाई परेजस्तो पीर हामीहरूलाई पर्दैन । खूब मजा गर– हाम्रो अफिसर पनि यही भन्छ । अहिले म त्योसँग छुट्टी लिएर यता आएको । हालैमा लडाइँ हुने कुरा छ । त्यसो हुनाले यता रङ्रुट तैयार गर्न आएको हुँ । किजात नहोला, ६ ओटालाई फसाइसकेको छु । सिपाही बन्नाले दूधको कुल्ला गर्न पाइन्छ , खसीको टाउको चमका राख्न पाइन्छ । फसाउनु के हो उनीहरूको उद्धार गर्नु हो । आफ्नो देशको निमित्त सिपाहीहरूको आवश्यकता छ ।" सिगरेटको धूवाँ मुखबाट निकाल्दै भन्यो "लडाइँमा मर्नाले सोभै स्वर्ग पुगिन्छ ।" यस बेला त्यसको मुख गीता पाठ गर्ने मानिसको जस्तो गम्भीर भयो ।

त्यसको चाखलाग्दो कुराले बाटो सजिलैसँग काटिइरहेको थियो । त्यही समयमा घाँस काटेर फर्कन लागेकी केटीहरू सामुन्नेतिरबाट आइरहेका थिए । आँखा भिम्क्याउँदै त्यसले भन्यो, "पर्खनोस् है, म अब यिनीहरूलाई जिस्क्याउँछु ।" अगाडि बढेर पहिले त त्यसले उनीहरूलाई सलाम गर्‍यो पछि कुन्नि के भन्यो । त्यसको कुरा सुनेर अरू सबै त धत् भनेर आफ्नो बाटो लागे तर एउटीले घाँसको भारी भैंमा फ्याँकी र कम्मरमा हात लाएर आफ्नो सारा शरीर हल्लउँदै दाँत देखाई देखाई त्यसलाई गाली गर्न थाली । मेरो साथी सिपाही लाग्यो पेट मिचीमिची हाँस्न र मतिर फर्केर भन्यो– "बडो मापाकी रहिछ । सधैं आफ्नो लोग्नेलाई यसै गरेर गाली गर्दी हो, म जे किरिया पनि खान सक्तछु ।"

हामीहरू अगाडि बढिरहेका थियौं । "यी केटीहरूलाई बुझ्न सारै गाह्रो हुन्छ । म पनि एकचोटि एउटीको फन्दामा परिसकेको थिएँ । अँ......" त्यसले लामो सास तान्दै भन्यो । त्यस बखतमा त्यो

पत्थरका मूर्तिझैं कठोर देखा पऱ्यो, त्यसका गोडा मशीनझैं स्वतः अगाडि बढिरहेका थिए । ठिक्क हामीहरूको सामुन्ने पहेंला सूय पहाडको अर्कापट्टि ओर्लिरहेका थिए । मैले बडो उत्सुकतासँग सोधें "अँ, त के भयो ?"

"अँ, म भन्दै थिएँ । म पनि एउटी केटीलाई प्रेम गर्थें । कसरी म त्यसको प्रेममा परें मलाई थाहा छैन । त्ससँग कति दिन मैले हाँसी-खेली बिताएँ । एक दिन आइतबार मैले आफूलाई त्योसित प्रेम गर्न थालेको पाएँ । त्यस दिन मलाई बिदा थियो । साँझ पर्नासाथ म दौडीदौडी त्यसकहाँ गएँ ।" त्यसको सास बेगसित चल्न थाल्यो । "त्यस दिन त्यसले नीलो गाउन लाएकी थिई पोडे, त्यस दिन त्यो निक्कै राम्री भएकी थिई ।"

ठीक त्यै समयमा हामीहरूलाई उकालो लाग्नु थियो । "पर्खनुहवस् दुईवटा उखुको लाँक्रा किनेर ल्याउँछु । उकाला लाग्यो । उखु टेकीटेकी हिंड्न सजिलो हुन्छ र माथि पुगेपछि त्यसलाई चुस्ता थकाइ पनि मेटिन्छ । मन परेन के यो कुरा ?" यति भनेर त्यो गयो र एकछिन पछि दुईवटा उखु किनीकन लिएर आयो । एउटा उखु मलाई दिएर त्यसले फेरि भन्न थाल्यो "तर त्यस केटीले मलाई खूब छकाई । त्यो कप्तानसँग पो गई । त्यसको राम्रो लुगाले त्यसलाई लोभ्यायो । तर म तपाईंलाई विश्वास दिलाउँछु त्यो त्यस बूढो कप्तानसँग पनि बस्न सक्तिन । यसै गरी उडिरहन त्यसलाई आनन्द आउँछ, त्यस राम्री केटीलाई ।" हावाको सानो लहरले त्यसको अन्तिम वाक्यलाई बगाएर लिएर गयो ।

म आफ्नो मनमा त्यसको तर्कना गरिरहेको थिएँ । त्यसो हुनाले मैले केही बोलिनँ । मलाई चूप लागेको देखेर त्यसले मुसुक्क हाँसेर भन्यो "म एक बोतल रक्सीको बाजी लाउँछु । तपाईंले अहिले आफ्नी स्त्रीलाई सम्झिरहनु भैरहेको छ, होइन त यो कुरा ? हेर है, झुट्टा नबोल्नू, किरिया ।"

मैले केही पनि उत्तर दिइनँ । केही बेरपछि मैले सोधें "भन त, सिपाही दाइ, तिमीहरू लडाईंमा कसरी जान्छौ ? मब, गोली, मृत्यु म त कल्पना पनि गर्न सक्तिनँ त्यस भीषणताको ।

तिरस्कारपूर्ण हाँसो हाँसेर उसले मेरो काँधमा धाप मारेर उत्तर दियो "तिमीजस्तो कलिलो मान्छेको निमित्त त्यो ठाउँ होइन । मलाई त लडाईंमा मजा आउँछ, तपाईंको रगत खाने ।"

यस्तै कुरा गर्दागर्दै हामीहरू वास बस्ने ठाउँमा पुग्यौं । इ दिन त दुइ घण्टा अझै बाँकी थियो तर पश्चिमको पहाडले सूर्यलाई ढाकिदिएका हुनाले पानीको कलकल ध्वनिसँगसँगै अन्धकार पनि छिटैछिटै तलतिर झरिरहेको थियो ।

मैले भनें "अब त म अगाडि हिंड्न सक्तिनँ । राती बस्ने ठाउँ खोज्नु पर्‍यो ।"

ठाउँको निमित्त केही धन्दा नमान्नुहवस् । म यहाँको ढुङ्गाढुङ्गादेखि परिचित छु । मेरा पुर्खाहरू यहीं बस्थे हिंड्नुहवस्, म तपाईंलाई एउटा पसलमा लिएर जान्छु । त्यस पसलकी बुढियालाई चिन्छु । कुनै समय थियो जब त्यस बुढियालाई घेरेर कति मान्थे, मेरा बाबु पनि तिनीहरूमध्ये एउटा थिए, त्यसको खूब बिक्रि हुन्थ्यो तर अब त्यो बुढियालाई कोही पनि फुटेको आँखाले पनि हेर्दैनन् । तपाईंको मासु खाने, त्यसकी एउटी छोरी नभएकी भए म पनि अहिले त्यहाँ जाने थिइनँ ।"

कुरा गर्दागर्दै हामीहरू त्यो पसलनेर आइपुग्यौं । घर काठको थियो, पुरानो र पानीले कुहिसकेको । सामुन्नेको भाग खसिसकेको थियो, त्यसो हुनाले मानिसलाई भित्र पस्ता निहुरीकन जानु पर्थ्यो ।

हामीहरू भित्र पस्यौं, कोठामा धूवाँ रँगमगिएको हुनाले सानो टुकीको प्रकाश झन् धमिलो भएको थियो । त्यसमा पनि मेरो आँखा निद्राले लट्ठ भएको हुनाले मलाई अहिले त्यहाँको दृश्य सपनाजस्तो लाग्दछ । भित्र दुईवटा पहाडी मानिस चिया र पुरानो बासी रोटी खाइरहेका थिए । कराएर कुरा गर्दा तिनीहरू कैलेकैले आफ्नो हात टेबुलमा फ्याँक्थे । कुनामा, मैले देखें आगो बलिरहेको थियो, जसमाथि एउटा चियाको केतली बसाएको थियो । यै धूवाँको कारण थियो । छेउमा एउटा विचित्र शेफको ढाँचाको आलमारी थियो, त्यसमा लगाएको काँच फुटिसकेको थियो, त्यसो हुनाले त्यसभित्र रहेको लिली बिस्कुटको पुरानो टीनको

डब्बा अरेन्ज पिकोको खाली डब्बा र दुईतीन गिलास देखा पर्थे । एउटी मोटी बुढिया आफ्नो कुहिनो टेबुलमा टेकाएर ती दुईवटा पहाडीको कुरा ध्यानपूर्वक सुनिरहेकी थिइ । कैले कैले खित्का छोडेर हाँस्थी र वीचवीचमा केही बोलिहाल्थी ।

त्यो कोठामा प्रवेश गर्दा सिपाही अगाडि अगाडि र म पछिपछि थिएं । सिपाहीलाई देख्नेवित्तिकै त्यो बुढिया उभिई र तलदेखि माथिसम्म त्यसलाई हेरेर भनी "आच्चे कताबाट बाटो बिर्सेर ?"

"बाटो बिर्सेर होइन । आँ तिम्री छोरी खोइ नि ?" आफ्नो दुवै हात हल्लाउँदै त्यो कोठाको स्वामीभैंm यताउति टहल्न थाल्यो ।

"छोरी त वाहिर गएकी छ, अब आइपुग्ने बेला भयो । तपाईंले त हामीहरूलाई पटक्क बिर्सनु भएछ ।"

त्यही समयमा एउटा अलिक मोटी युवती कोठाभित्र पसी र उपेक्षा गर्दै भनी "बिर्सन देऊ किन हामीलाई कसैले सम्भोस् ?"

त्यो स्त्रीले मैलो छीटको धोती लगाएकी थिइ । त्यो अन्धकारमा पनि त्यसको गालाको कालो कालो दाग देखा पर्थ्यो । कम्मरमा धोतीभन्दा माथि एउटा मैलो लुगाको टुक्रो बाँधेकी थिई । त्यो विशेष राम्री त थिइन, तर उसमा यौवनको स्वाभाविक आकर्षण अवश्य थियो ।

त्यसलाई देख्नासाथ सिपाही कुदेर त्यसनेर गयो "ओ, तिमी, पत्याउने त छैनौ तर तिमीले नै मलाई यहाँसम्म तानेर ल्याएकी । तिमीलाई बिर्सन सक्छु ? मैले त यहाँ आउनासाथ तिम्री आमासँग तिम्रो विषयमा सोधें । उत्निखेरै तिमी पनि आइहाल्यौ । भन के किरिया हालूं ?"

"भो, भो धेरै कुरा नगर । आँखाको सामुन्ने त धेरै धेरै कुरा गर्छौ पछि......." भन्दै त्यो अर्को सानो कोठाभित्र पसी । सिपाही पनि त्यसको पछि दगुर्‍यो । भित्र पसेर त्यो युवतीले एउटा टुकी बाली र विछाएको सुकुलमा लडी । सिपाही दैलोमै थचक्क बस्यो र कुरा गर्न लाग्यो ।

"लौ त, भन मेरो निमित्त तिमीले के के लिएर आयौ

एकाबिहानै सिपाहीले मलाई हल्लाएर उठायो । अझ दुई घडी रात बाँकी नै थियो । बाहिर असाध्य जाडो थियो । पर्वतका दुई श्रेणीको बीचमा चिसो बतास बगिरहेको थियो । नजीकैको खोलो कलकल गर्दै बगिरहेको थियो । मानिसहरू अझै उठिसकेका थिएनन् । कुखुराहरू बास्न थालेका थिए । चारैतिरको पहाड कालाकाला र धुम्म देखिन्थे । त्यो ठाउँमा निकै जाडो पर्ने हुनाले ती पहाडहरूमा कुनै वृक्ष उम्रेका थिएनन् । म आँखा मिच्दै उठें । त्यो सिपाहीले लापरवाहीसँग, "मेरो सानो मालिक, म त बिदा लिन्छु, मलाई यता जानु छ, तपाईंलाई उता "मेरो दुवै काँधलाई आफ्नो बलियो हातले दुख्ने गरी हल्लाउँदै भन्यो । मेरो मस्तिष्कमा विषादपूर्ण विचार आउन थाल्यो । म त्यसलाई स्नेह गर्न लागिसकेको थिएँ तर त्यसलाई कसैको केही वास्ता रहेनछ । लमकलमक गर्दै त्यो आफ्नो बाटो लाग्यो । म उभिएर हेरिरहें ।

मैले लडाईमा मारिएका सिपाहीहरूको पत्थरको स्मारक धेरै देखेको छु, तर हाडछाला भएको सिपाहीसँग भेट्ने मौका एकचोटि मात्रै पाएँ ।



## साझा प्रकाशनद्वारा प्रकाशित केही कथाकृति

| | |
|---|---|
| अर्धविराम | *अशेष मल्ल* |
| आकाशको फल | *मनु ब्राजाकी* |
| आलुप्याज/प्याजआलु | *गोरखबहादुर सिंह* |
| एक जोर फूलघोडा | *इन्द्रकुमार श्रेष्ठ 'सरित्'* |
| कथैकथा | *गोविन्दबहादुर मल्ल 'गोठाले'* |
| छापाखानाको कीरो | *महेशविक्रम शाह* |
| जङ्गबहादुर र हिरण्यगर्भकुमारी | *गोविन्दबहादुर मल्ल 'गोठाले'* |
| झ्यालबाट | *सं. ईश्वर बराल* |
| नगरसभाको पाँचौं दिन | *गोरखबहादुर सिंह* |
| निःशब्द प्रश्नहरू | *इल्या भट्टराई* |
| नेपाली कथा भाग १ | *सं. नरहरि आचार्य/महादेव अवस्थी/ देवीप्रसाद गौतम* |
| नेपाली कथा भाग ३ | *सं. डा. ऋषिराज बराल/ कृष्णप्रसाद घिमिरे* |
| नेपाली कथा भाग ४ | *सं. दयाराम श्रेष्ठ* |
| पारदर्शी मान्छे | *मनु ब्राजाकी* |
| पुष्करशमशेरका कथाहरू | *सं. दयाराम श्रेष्ठ 'सम्भव'* |
| प्रयोग/प्रत्यारोपण | *विजय चालिसे* |
| ब्रितेको | *ध्रुव सापकोटा* |
| बिलाउँदै गएको गीत | *गणेश रसिक* |
| बिसन्चो | *रत्न प्रजापति* |
| लघु कथा : प्रक्रिया र पाठ | *सं. गोपाल अश्क* |
| विघटन | *हरिहर खनाल* |

मूल्य : रु. ६०.००





मुद्रक : साझा प्रकाशनको छापाखाना, पुलचोक, ललितपुर, फोन ५५२१०२३, फ्याक्स : ५५४४२३६